न जायते म्रियते वा कदाचिन्नायं भूत्वा भविता वा न भूयः ।
अजो नित्यः शाश्वतोऽयं पुराणो न हन्यते हन्यमाने शरीरे ।।

–श्रीमद्भगवद्गीता २।२०

# इन्दिरा



# स्मृतिकाव्य

शरदकुमार भट्टराई

| | | |
|---|---|---|
| ग्रन्थको नाम | : | इन्दिरा–स्मृतिकाव्य |
| लेखक | : | शरदकुमार भट्टराई |

| प्रकाशक | : | सरिता दाहाल<br>सविता अर्याल<br>सञ्जीवकुमार भट्टराई<br>सतीशकुमार भट्टराई<br>सगुनकुमारभट्टराई |
| प्रकाशनमिति | : | वि.सं. २०७९ माघ ४ गते<br>माघकृष्णद्वादशी वार्षिक-पुण्यतिथि |
| प्रकाशितसङ्ख्या | : | ५०० |
| मूल्य | : | उपहारस्वरूप |
| कम्प्युटर सेटिङ्ग | : | श्रीखड्गप्रसाद खनाल |
| मुद्रक | : | एलायन्स प्रिन्टर्स एण्ड मिडिया हाउस प्रा.लि. |
| ISBN | : | 9789937-1-2721-9 |

*प्रकाशकहरूका तर्फबाट*

# ग्रन्थसमर्पण





पितामह
ब्रह्मलीन धर्मदत्त भट्टराई

पितामही
ब्रह्मलीना रन्धतादेवी भट्टराई





गुरुमाता
ब्रह्मलीना बालकुमारी

ममतामयी माता
ब्रह्मलीना इन्दिरादेवी भट्टराई

ब्रह्मस्वरूपमा पुग्नुभएका हाम्रा प्रातःस्मरणीय ब्रह्मलीन, श्रद्धेय, पितामह धर्मदत्त भट्टराई, प्रातःस्मरणीया ब्रह्मलीना श्रद्धेया पितामही रन्धतादेवी भट्टराई, ब्रह्मलीना श्रद्धामयी गुरुमाता बालकुमारी र हाम्री ब्रह्मलीना अत्यन्त ममतामयी माता इन्दिरादेवी भट्टराईज्यूहरूप्रति यो ग्रन्थ समर्पण गर्दछौँ।



ब्रह्मलीना माता श्रीमती इन्दिरा भट्टराई
आविर्भाव – वि.सं. १९९६ फाल्गुन ३० गते
तिरोभाव – वि.सं. २०७८ माघ १५ गते



ब्रह्मलीना माता श्रीमती इन्दिरा भट्टराई

आविर्भाव – वि.सं. १९९६ फाल्गुन ३० गते

तिरोभाव – वि.सं. २०७८ माघ १५ गते



ब्रह्मलीना माता श्रीमती इन्दिरा भट्टराई

आविर्भाव – वि.सं. १९९६ फाल्गुन ३० गते

तिरोभाव – वि.सं. २०७८ माघ १५ गते



ब्रह्मलीना माता श्रीमती इन्दिरा भट्टराई

आविर्भाव – वि.सं. १९९६ फाल्गुन ३० गते

तिरोभाव – वि.सं. २०७८ माघ १५ गते



ब्रह्मलीना माता श्रीमती इन्दिरा भट्टराई
वि.सं. २०४३ साल, तानसेन, पाल्पा



ब्रह्मलीना माता श्रीमती इन्दिरा भट्टराई
आविर्भाव – वि.सं. १९९६ फाल्गुन ३० गते
तिरोभाव – वि.सं. २०७८ माघ १५ गते




मिति २०२६ सालमा सानी छोरी सविता भट्टराईको अन्नप्राशनको शुभ अवसरमा हजुरआमा रन्धता भट्टराई, पिता शरदकुमार भट्टराई, माता इन्दिरा भट्टराई र ठुली छोरी सरिता



माता इन्दिराका साथ ठूली छोरी सरिता र सविता
२०२६ साल, काठमाडौँ



सञ्जीव र सतीश १० दिन भएका दिन मातापिता घाममा राखेर हेर्दै



दशौँ दिनका दिन आमाका काखमा
छोरो सतीश, पार्दी पोखरा



अन्नप्राशनपछि माता र पिताका काखमा सञ्जीव र सतीश



नवजात सञ्जीव र सतीश १० महिना हुँदा मातापिताका काखमा, साथमा छोरी सरिता र सविता। पार्दी, पोखरा, २०२८।१२।२७



अन्नप्राशनका दिन आमाको काखमा सञ्जीव र सतीश, पार्दी पोखरा २०२८।६।१३





छोरा छोरीका साथ माता इन्दिरा। निजी निवास। २०३४ साल आश्विन, काठमाडौँ



काठमाडौँको रत्नपार्कमा पाँचै जना छोरा छोरीहरूका साथ माता इन्दिरा भट्टराई



तीन भाइ छोराहरूका साथमा आमा इन्दिरा



मिति २०४२ सालको भाइटीकाको अवसरमा माता इन्दिरा भट्टराईका साथमा ठूली छोरी सरिता, सानी छोरी सविता र कान्छो छोरा सगुनकुमार भट्टराई



कान्छो छोरा सगुनकुमार भट्टराईको व्रतबन्धमा भिक्षादान गर्दै माता इन्दिरा भट्टराई मिति २०४३ जेठ ५ गते



पाल्पाको तानसेन दरबारमा मातापिता (मिति २०४३ साल)



ब्रह्मलीना मातामही जानकीका हातबाट विजया दशमीको टीका ग्रहण गरेपछि ब्रह्मलीना माता इन्दिरा आमाका साथ २०४० साल विजया दशमी, इनरुवा



मिति २०४२ साल कार्तिकमा तानसेन दरबार पाल्पामा आमाका साथ ठुली छोरी सरिता दाहाल र ठुली नातिनी सुदीक्षा दाहाल





पाल्पाको तानसेन दरवारमा २०४२ सालको भाइटीका



मिति २०५२ माघ २ गते
(बायाँबाट) श्रीमती इन्दिरा भट्टराई, श्रीशरदकुमार भट्टराई र श्रीउद्ध भट्टराई, गयामा श्राद्ध गर्दै



मिति २०५२ माघ १ गते
श्रीशरदकुमार भट्टराई र श्रीमती इन्दिरा भट्टराई काशीमा गङ्गास्नानपछि प्रार्थना गर्दै



मिति २०५२ माघ १ गते
श्रीशरदकुमार भट्टराई र श्रीमती इन्दिरा भट्टराई सारनाथ, वाराणसीमा



मिति २०५२ माघ ४ गते
श्रीशरदकुमार भट्टराई र श्रीमती इन्दिरा भट्टराई वनारसहिन्दुविश्वविद्यालय अगाडि



मिति २०५२ माघ १ गते
श्रीशरदकुमार भट्टराई र श्रीमती इन्दिरा भट्टराई प्रयागमा त्रिवेणीस्नानपछि



पिताजी शरदकुमार भट्टराईका साथ माताजी श्रीमती इन्दिरा भट्टराई
तानसेन दरबार (मिति २०४२ कार्तिक २२)



मिति २०६२ साल आषाढ २६ गते कान्छो छोरा सगुनको विवाहका सन्दर्भमा नवबधू पूजाका साथ आमा इन्दिरा भट्टराई मानुपाथी भर्दै



विजयादशमीको उपलक्ष्यमा माताजीलाई टीका लगाउँदै पिताजी शरदकुमार भट्टराई मिति २०४३ साल, तानसेन दरबार, पाल्पा



कान्छा छोरा सगुनलाई विजायाको शुभउपलक्ष्यमा टीका लगाइदिँदै मातापिता, मिति २०६८ साल असोज १९ गते सिड्नी अष्ट्रेलिया



मातापिता स्वनिवासको प्राङ्गणमा मिति २०६७ श्रावण ३०



सगुनकुमार भट्टराई तथा पूजा भट्टराईका जेठा पुत्र
सुदीप भट्टराईको अन्नप्राशनपछि माता पिताका साथमा सुदीप
मिति २०६७ श्रावण ३० गते



कान्छा छोरा सगुन भट्टराईका जेष्ठ पुत्र सुदीपको
अन्नप्राशनका समयमा आमा र सगुन
मिति २०६७ श्रावण ३० गते





सगुनकुमार भट्टराई तथा पूजा भट्टराईका जेठा पुत्र सुदीप भट्टराईको अन्नप्राशनपछि माताका काखमा सुदीप
मिति २०६७ श्रावण ३० गते





माता इन्दिरा भट्टराईका साथमा नवजात नाति सुदीप र कान्छा छोरा सगुन मिति २०६७ श्रावण ३० गते



मिति वि.सं. २०६७ साल श्रावण ३० गतेका दिन नातिनी सर्वज्ञालाई गुन्यूचोलो प्रदान गरिएको साथमा माता, पिता, सतीश, सगुन, दिदीहरू रमा, सीता र तारा



मिति २०६८ साल असोज ६ गतेका दिन अष्ट्रेलीया प्रस्थान गर्न लाग्दा नातिनी सुजाताबाट टीका प्रसाद ग्रहण गर्दै माता पिता




कान्छा छोरा सगुन र बुहारी पूजालाई विजयाको शुभउपलक्ष्यमा टीका लगाइदिँदै माता पिता (मिति २०६८ साल असोज १९ गते सिड्नी, अष्ट्रेलिया)




२०६८ साल कार्तिक २८ गते सिड्नीबाट नेपाल फर्कने सन्दर्भमा बिदा हुँदै कान्छा छोरा, बुहारी र नातिका साथमा माता पिता



परिवारसहित मातापिता, निजी निवास, काठमाडौँमा




दायाँबाट ठूलो छोरा सञ्जीवकुमार भट्टराई, श्रीमती सुषमा भट्टराई मातापिता, माहिलो छोरा सतीशकुमार भट्टराई, श्रीमती सुस्मिता भट्टराई, कान्छो छोरा सगुनकुमार भट्टराई, श्रीमती पूजा भट्टराई



मातापिताका साथमा दुइटी छोरीहरू ठुली छोरी सरिता दाहाल र कान्छी छोरी सविता अर्याल



मातापिताका साथमा छोरा, बुहारी, छोरीहरू, ज्वाईं चण्डिका दाहाल र नातिनी सर्वज्ञा भट्टराई



ठूली नातिनी सुदीक्षाका साथ माता इन्दिरा



मातापिताका साथमा छोरीहरू सरिता र सविता



जेठा छोरा सञ्जीवकुमार र बुहारी सुषमालाई विजयाको टीका लगाइदिँदै मातापिता, मिति २०७८ साल असोज १९ गते



माहिलो छोरा सतीसकुमार र बुहारी सुस्मिता 'इनु'लाई विजयाको टीका लगाइदिँदै मातापिता, मिति २०७८ साल असोज १९ गते



बुहारी सुषमा र सुस्मिता 'इनु'का साथमा माता इन्दिरा भट्टराई मिति २०७८ साल बडादशैँ



माहिलो छोरा सतीसकुमार र बुहारी सुस्मिता 'इनु'लाई विजयाको टीका लगाइदिँदै मातापिता, मिति २०७८ साल असोज १९ गते



माता इन्दिरा भट्टराइलाई विजयाको टीका लगाइदिँदै पिताजी, मिति २०७८ साल असोज १९ गते



ठुलो ज्वाई चण्डिप्रसाद दाहाल र छोरी सरितालाई शुभ विजयाको टीका लगाइदिँदै बाबा आमा



औषधोपचारका सन्दर्भमा नर्भिक हस्पिटलमा माता पिता



नातिनी सुदीक्षाका साथमा माता



निजी निवासमा परिवारसहित मातापिता



माता इन्दिरा भट्टराईका साथमा बुहारी सुस्मिता 'इनु' भट्टराई



निजीनिवासको प्रङ्गणमा बाबा आमाका साथमा माहिली बहिनि सीता र छोरीहरू



निजीनिवासमा आमाका साथमा ठुली छोरी सरिता, ठुली नातिनी सुदीक्षा र पनातिनी नाइशा




निजी निवासमा परिवारसहित मातापिता



चन्द्रभालेश्वर महादेवको दर्शनपछि मातापिताका साथमा सामुहिक तस्बीर



ठुली छोरी सरिता आमा इन्दिराका साथमा



ठुली छोरी सरिता दाहाल आमाका साथमा



सहस्र चन्द्रदर्शन गरेको उपलक्ष्यमा विधिपूर्वक पूजन गर्दै मातापिता मिति २०७८ वैशाख १३





आदरणीय पिता शरदकुमार भट्टराईका साथमा प्रातः स्मरणीया माता



१०४ वर्ष उमेर पुगेकी आफ्नी आमा ब्रह्मलीना जानुकादेवीका साथ माता इन्दिरा भट्टराई



अत्यन्त चरमावस्थामा माहिली बहिनी सीताका साथमा आमा इन्दिरा



१०४ वर्ष पुग्नुभएकी आमा जानुका पोखरेलका साथमा
साहिँली छोरी इन्दिरा भट्टराई, नातिनीहरू सरिता,
सविताका साथै पनातिनी सुदीक्षा र सर्वज्ञा



२०७८ सालको भाइटीकाका दिन
ब्रह्मलीना माताका साथमा भदाहा विनय पोखरेल



छोरी र बुहारीका साथमा माता



परिवारका साथमा आमा



कान्छो छोरा सगुन, बुहारी पूजा नाति सुदीपसहित
आमा मनकामना दर्शनमा २०६७ भाद्र २ गते



तीनजना छोराहरूका साथमा आमा



मातापिताका साथमा माहिली बहिनी सीता र कान्छी बहिनी
तारा मिति २०७८ सालको भाइटीका



खोटाङ जिल्ला अन्तर्गत रावा लामिडाँडामा रहेको घरको
आँखिझ्यालयुक्त मातापिताको शयनकक्षको बाहिरी दृश्य



अशक्त अवस्थामा आमाको सेवा गर्दै ठुली बुहारी सुषमा



अशक्त अवस्थामा पुगेकी आमाका साथमा छोरीहरू



नर्विक अस्पतालको बेडमा उपचारार्थ आमा



माता इन्दिरा भट्टराईको अन्तिम अवस्था
(मिति २०७८ माघ १४ गते)



माता इन्दिरा भट्टराईको १३औँ दिनको शुद्धशान्ति पश्चात् पिताका साथमा छोराहरू

# प्रकाशकीय

## अत्यन्त मर्मस्मर्शी
## हार्दिक श्रद्धाञ्जलि र समर्पण

हाम्री प्रातःस्मरणीया ब्रह्मभूता माता इन्दिरा भट्टराईको स्मृतिका लागि आदरणीय बाबा शरदकुमार भट्टराईज्यूबाट वार्णिक छन्दमा प्रणीत यो ‘इन्दिरा स्मृतिकाव्य’को पाण्डुलिपि हामीहरूले पढ्न पायौँ र यस काव्यका लेखक बाबाको मुखबाटै सस्वर वेदनापूर्ण वाणीबाट यो काव्य आद्योपान्त सुन्यौँ। यसबाट हामी उहाँहरूका सन्तानहरू सारै द्रवीभूत र अत्यन्त भावविह्वल भयौँ। हाम्री ममतामयी माता इन्दिरा भट्टराईज्यू २०७८ साल माघ १५ गते द्वादशी तिथिको प्रातः ब्रह्ममुहूर्तमा ब्रह्मलीन हुनुभएको र आज अर्थात् वि.सं. २०७९ साल माघ ४ गते वार्षिकी पूर्ण भएको छ।

ब्रह्मलीना माता ब्रह्मलीन हुनु पूर्वदेखि नै पुराण, वेद, उपनिषद्, गीता, ब्रह्मसूत्र आदि आध्यात्मिक शास्त्रहरूको अनवरत श्रवण गर्नुहुन्थ्यो । अन्तिम अवस्था आउँदै गर्दा शास्त्रानुसार दशदान, वैतरणी आदि धार्मिक कृत्य सम्पादन गरेका थियौँ। माता ब्रह्मलीना भएपछि प्रथमदिनदेखि लिएर तेह्रौँ दिनसम्म सम्पादन गर्नुपर्ने दशगात्रादि कर्मका साथै सम्पूर्ण तेह्रौँ दिनसम्म गरिने धार्मिक कृत्य र दानादि कर्म पूर्ण गरेर आँशुका अजस्रधारा वर्षाउँदै हामीहरूले ममतामयी मातालाई बिदा गरेका थियौँ । त्यसपछि वर्षदिनभरि गरिने मासिक श्राद्धादि विधिपूर्वक सम्पादन गर्दै आज वार्षिकी पुण्य तिथिमा आइपुगेका छौँ।

हाम्रा पूजनीय बाबा शरदकुमार भट्टराईज्यूको गत वर्ष वि.सं.

२०७८ साल वैशाख १३ गतेदेखि र हाम्री ममतामयी माताको पनि साथसाथै सहस्रचन्द्रदर्शन गरेको महान् अवसरमा चौरासीको वर्षभरि गरिने व्रत, पूजा, पाठ आदिको धार्मिक कृत्यहरू २०७८ साल वैशाखदेखि नै अनवरत रूपमा चलिरहेको थियो । तर दुर्भाग्यवश चौरासी पूजा पूर्ण नहुँदै आमा ब्रह्मलीन हुनुभयो । यस अकल्पनीय घटनाबाट हामी उहाँका सम्पूर्ण सन्तानहरू अत्यन्त मर्माहत भएका छौँ ।

योभन्दा अघि पचासौँ वर्षदेखि अनवरतरूपमा लौकिक साहित्यका साथै अद्वैतवेदान्तका अध्येता, महत्त्वपूर्ण दर्जनौँ अद्वैतवेदान्त ग्रन्थका लेखक, प्रकाशक र प्रवचनकर्ताका रूपमा सुपरिचित हाम्रा बाबा आमाको अप्रत्यासितरूपमा भएको निधनबाट अत्यन्त मर्माहत हुनुभयो ।

यसै संवेदनशील अवस्थामा एकाकी जीवन बिताइरहनुभएका हाम्रा बाबाबाट आमाको स्मृतिमा ‘इन्दिरा स्मृतिकाव्य’ नामक ग्रन्थको लेखन भइरहेको हामीहरूले थाहा पायौँ । त्यसपछि हाम्रा अनुरोधमा बाबाले अश्रुपातसहित वार्णिक छन्दमा लेखिएको ‘इन्दिरा स्मृतिकाव्य’का केही कविताहरू सस्वर वाचन गरेर हामीहरूलाई सुनाउनुभयो । हामीहरू अत्यन्त संवेदनशील भएर सुनिरह्यौँ, त्यसपछि हामीहरूले सोच्यौँ माता पिताको अकथनीय ऋणबाट हामीहरू जन्मौँजन्मसम्म पनि उऋण हुन सक्तैनौँ । अतः यस्तो अवस्थामा देशविदेशमा छरिएर बसेका उहाँहरूका सन्तान हामीहरूले यो ‘इन्दिरा स्मृतिकाव्य’ प्रकाशन गर्न पाए केही उऋण हुने थियौँ कि ! भन्ने लागेर काव्यका रचनाकार आदरणी बाबासँग प्रकाशनार्थ अनुरोध गर्‍यौँ । उहाँबाट ग्रन्थ प्रकाशनार्थ सहर्ष अनुमति

पाएर हामीहरू उहाँप्रति हृदयतः कृतकृत्य भएका छौँ।

यो अनुपम इन्दिरा स्मृतिकाव्यको प्रकाशनको गुरुतर अविभारा पाएका हामीहरूले हाम्री ममतामयी माताको वार्षिक पुण्यतिथिमा अर्थात् आज २०७९ साल माघ ४ गते हार्दिक श्रद्धाञ्जलि तथा श्रद्धासुमनका रूपमा सश्रद्ध उहाँलाई समर्पण गर्दैछौँ। यही नै हाम्रो उहाँलाई अर्पण गर्ने तर्पण र श्रद्धापूर्वक गरिने श्राद्धसमेत हुन जाओस् भनेर भगवान् श्रीपशुपतिनाथसँग प्रार्थना गर्दछौँ। ॐ ब्रह्मार्पणमस्तु।

## यस 'इन्दिरा–स्मृतिकाव्य'का प्रकाशकहरू

१. जेठी छोरी श्रीमती सरिता दाहाल र ज्वाइँ चण्डीप्रसाद दाहाल (अमेरिका)
जेठी नातिनी श्रीमती सुदीक्षा दाहाल कोइराला र ज्वाइँ नीरज कोइराला (अमेरिका)
जेठी पनातिनी नाइसा कोइराला र कान्छी पनातिनी सान्विका कोइराला (अमेरिका)
कान्छी नातिनी श्रीमती सुप्रिया दाहाल सेढाईं र ज्वाइँ दीवेश सेढाईं (अमेरिका)
जेठा पनाति इभानराज सेढाईं र कान्छा पनाति इथानराय सेढाईं (अमेरिका)
जेठा नाति सुशान्त दाहाल र एलिना (सौम्या) नेउपाने दाहाल (अमेरिका)

२. कान्छी छोरी श्रीमती सविता अर्याल र ज्वाइँ बद्रीराज अर्याल (नेपाल)
जेठी नातिनी श्रीमती सुजाता अर्याल काफ्ले र ज्वाइँ सञ्जीव काफ्ले (अमेरिका)
पनाति आर्यन अर्याल (अमेरिका)
कान्छी नातिनी आस्मा (आस्था) अर्याल (नेपाल)

३. जेठा छोरा श्रीसञ्जीवकुमार भट्टराई र पुत्रवधू सुषमा भट्टराई (क्यानडा)

४. माहिला छोरा श्रीसतीशकुमार भट्टराई र पुत्रवधू सुस्मिता 'इनु' भट्टराई (नेपाल)
नातिनी सर्वज्ञा भट्टराई (नेपाल)

५. कान्छा छोरा श्रीसगुनकुमार भट्टराई र पुत्रवधू पूजा भट्टराई (अष्ट्रेलिया)
जेठा नाति श्रीसुदीपकुमार भट्टराई र कान्छा नाति श्रीसुमनकुमार भट्टराई (अष्ट्रेलिया)

# स्मृतिकाव्यका पाना पल्टाउँदा

“सोऽहं भगवो मन्त्रविदेवास्मि नात्मविच्छ्रुतं ह्येवं मे भगवद्दृशेभ्यस्तरति शोकमात्मविदिति सोऽहं भगवः शोचामि तं मा भगवाञ्छोकस्य पारं तारयतु”[१] भनेर हरदम प्रार्थना गरिरहने स्रष्टाले शोककाव्य त कसरी लेख्ला र ! ब्रह्मनिष्ठ व्यक्तिमा संसारनिष्ठा सम्भव छैन । त्यसैले श्रद्धेय बुबा शरदकुमार भट्टराईज्यूले “उनको स्मृतिमा केही कोर्दै छु” भन्दै गर्दा त्यो कोर्दै गरेको रचना शोककाव्य चाहिँ निश्चय नहोला भन्ने भाव सहसा मनमा आयो र फोनबाटै फ्याट्ट भनिहालेँ– “अद्वैतवेदान्तको साधकले शोककाव्य त पक्कै लेख्दैन होला ।”

पछि जब काव्यको टङ्कनपछि सम्पादनका निम्ति प्रथम मुद्रित प्रति हात पऱ्यो, काव्य सोचेजस्तै रहेछ । साँच्चै नै शोककाव्य नभएर यो त एउटा स्मृतिकाव्य पो रहेछ । काव्य पल्टाएँ, काव्यपङ्क्तिहरूमा नजर फेरेँ । बाह्य स्वरूप हेर्दा शोककाव्यजस्तो तर आन्तर प्रस्तुतिमा गहिरिँदा वेदान्तै वेदान्त छताछुल्ल । शोककाव्यमा अध्यात्म हैन, संसार पोखिएको हुन्छ छरपस्ट तर यसमा त संसार प्रकट हुँदै गर्दा पनि अध्यात्मले पल्ला नछाडेको पाएँ ।

आफ्नी जीवनसङ्गिनीको वियोगमा उद्‌बुद्ध भइरहेका तीव्र संस्मृतिहरूलाई समेत शोकको संज्ञा दिन कविको आध्यात्मिक हृदय राजी देखिएको छैन । आफ्नी जीवनसखीको अविरल यादलाई बगाइरहँदा पनि कविले वेदान्तवर्णित संसारको भ्रान्तिमयतालाई भुलेका छैनन् ।[२] त्यसैले त पत्नीसुखको मधुरस्मृतिमा समेत उनी त्यो केवल

---

१. छान्दोग्योपनिषद् ७।१।३

२. यात्री थिइन् गइसकिन् किन शोक गर्छु ?
वेदान्त नै अब भुलेँ कि ! म छक्क पर्छु ।
यो भ्रान्ति हो भ्रम सबै अनि तुच्छ भान
यो प्रातिभासिक असत् सपनासमान ।। (दोस्रो स्मृतिपुष्प - वियोग १६)

तुच्छ ग्राम्य सुख भएको निर्क्योलमा पुगेका देखिन्छन् । यस कुरामा होस राखी रामनाम लिनुपर्ने वा भगवद्भक्तिमा लाग्नुपर्ने सन्देशसमेत यहाँ पाठकका निम्ति प्रवाहित भएको पाइन्छ ।[३]

दारसङ्ग्रहका इच्छुक हर व्यक्तिलाई मनोवृत्तानुसारिणी सहधर्मिणीको अपेक्षा रहन्छ । साधक त स्वसाधनामा समेत उनको साहचर्य चाहन्छ । यस काव्यका स्रष्टालाई पनि आफ्नी सहचरीले आफ्नो घर-व्यवहार सम्हालिदिएकोमा भन्दा पनि वेदान्तश्रवण गरिदिएर ब्रह्माभ्यासमा सहायता पुऱ्याएकोमा अधिकतर प्रसन्नता छ ।[४] यो स्मृतिकाव्य कविको मनको वहमात्र हैन । यो त श्रुतिसन्देश हो ।[५] स्मृतिशेष आफ्नी जीवनसखीको स्मृतिको बहानाले पोखिएको अध्यात्मोपदेश हो यो । यो काव्यात्मक प्रस्तुतिले कविलाई मानसिक शान्ति प्रदान गरेको तथ्यसमेत यहाँ उल्लिखित छ । झट्ट हेर्दा विरहकविताझैँ लाग्ने काव्यपङ्क्तिहरूले शोक बढाउने नभएर पाठकको शोक मास्ने कुरामा कवि विश्वस्त देखिन्छन् ।[६]

---

३. आयौँ बस्यौँ सँगसँगै अति लामु काल
यो ग्राम्य तुच्छ सुखको नबुझेर चाल ।
यस्मै रम्यौँ सकल जीवन भो तमाम
होसै भएन लिनुपर्दछ रामनाम ।। (दोस्रो स्मृतिपुष्प - वियोग १७)

४. हे इन्दु ! यी सकल शास्त्र सुनाउँथेँ म,
सुन्थ्यौ तिमी सहचरी र रमाउँथेँ म । (तेस्रो स्मृतिपुष्प - अज्ञान २३)

५. श्रुतिसन्देश यो मेरो सारांशमा गईकन ।
मनका वेदना पोखेँ केही शान्त भयो मन ।। (बाह्रौँ स्मृतिपुष्प - ब्रह्मविद्या २२४)
संसार हो भयद जन्म र मृत्युपूर्ण
जन्मेर फेरि यस भित्र हुँदैन पर्न ।
तस्मात् तिमी पनि न जन्मनु पार तर्नु
इच्छा पुनर्मिलनको कहिल्यै नगर्नु ।। (कारिका ५४५)

६. (क) मैले लेखेँ विरहकविता शोकका श्लोक लाग्ने,
यी हुन् मेरा स्मृतिमय सबै भित्रको शोक मास्ने ।
(चौधौँ स्मृतिपुष्प - प्रातिभासिक संसार ५३)

अध्यात्मसाधकले न शोककाव्य पढ्छ, न त लेख्छ नै । विशाल शोकसंसार हैन, सानै भए पनि अशोकवाटिका नै उसलाई मन पर्छ । शोकदशामा पनि अशोक रहनसक्ने क्षमता उसमा विद्यमान हुन्छ । संसारीको आँखाले उसको स्मृतिकाव्यलाई पनि फगत शोककाव्य नै ठहऱ्याउने हो तर त्यसमा उसले घोलेको अशोकरसायनलाई त एउटा सच्चा अध्यात्मसाधकले मात्र पहिचान गर्न सक्छ । कविज्यूको यो स्मृतिकाव्य त्यस्तै अध्यात्मसाधकहरूको करभूषण बनोस् ।

मुनि वाल्मीकिको लेखनीले शोकबीजबाट नै आदिकाव्य रामायण प्रकट गरेको इतिहास त जगजाहेरै छ । ऋषिहरूका वाणीबाट शोक बग्दा पनि श्लोक प्रकट हुन्थ्यो ।[७] त्यस्तै महर्षि वसिष्ठका सन्तति श्रद्धेय बुबा शरदकुमार भट्टराईज्यूको पत्नीविरहबाट समेत यस्तो विशिष्ट आध्यात्मिक स्मृतिकाव्यको अभिव्यक्ति भएको छ । उहाँको विरहवेदनासमेत समाजका निम्ति सत्यसन्देश बनेर प्रकट भएको छ ।

जसको स्मृतिमा यो काव्य प्रकट भयो, श्रद्धेय मुमा इन्दिरा भट्टराईज्यूलाई असीम ईश्वरीय अनुग्रह प्राप्त होस् । आपाततः नजर घुमाउँदा व्यवहारदशामा विरहवेदनाको घेराभित्र देखिए पनि भावदशामा निर्वेद रहनसक्ने सामर्थ्य स्मृतिकाव्यकार श्रद्धेय बुबा शरदकुमार भट्टराईज्यूका निम्ति परमात्माले सदा बनाइरहून् । ॐ तत्सत् ।

रोहिणीराज तिमिल्सिना

स्नातक, महेश-संस्कृत-गुरूकुलम्



---

(ख) संसार हो भयद जन्म र मृत्युपूर्ण, जन्मेर फेरि यस भित्र हुँदैन पर्न ।
तस्मात् तिमी पनि न जन्मनु पार तर्नु, इच्छा पुनर्मिलनको कहिल्यै नगर्नु ।।
(अठारौँ स्मृतिपुष्प – प्रातिभासिक संसार ५४५)

७. काव्यस्यात्मा स एवार्थस्तथा चादिकवेः पुरा ।
क्रौञ्चद्वन्द्ववियोगोत्थः शोकः श्लोकत्वमागतः ।। (ध्वन्यालोकः, प्रथमोद्योतः ५)

# सुभाशंसा

स्मृतिकाव्यको लेखन गर्नु त्यति सजिलो छैन । यस सन्दर्भमा आदरणीय व्यक्ति श्रीशरदकुमार भट्टराईज्यूद्वारा रचित 'इन्दिरा-स्मृति-काव्य' अत्यन्त हृदयस्पर्शी तथा मार्मिक देखिन्छ । सहस्रचन्द्रदर्शनको वर्षभरि विभिन्न कार्यक्रम गरी मनाउने क्रममा आफ्नी धर्मपत्नी बीचमा नै ब्रह्मलीन हुनुभएकाले सहस्रचन्द्रदर्शननामक चौरासीको अनुष्ठान पनि पूर्ण हुन पाएन । धर्मपत्नीको मर्मान्तक अवसानपछि उहाँमा मानसिक कष्ट उत्पन्न भएको देखिन्छ । त्यसैकारणले त्यस्तो मर्मान्तक घटनाबाट उत्पन्न शोकलाई अपमार्जन गर्न यो इन्दिरा-स्मृति-काव्यको स्वतःस्फूर्त रचना भएको देखिन्छ ।

विशेष परिस्थितिमा रचना गरिएको यो स्मृतिकाव्यमा जम्मा उन्नाइस स्मृतिपुष्प र दुई अनुसूचीमा बाँडिएको छ । जीवनको पूर्ण कालको इतिहास बोकेको पारिवारिक सम्बन्धलाई प्रष्टरूपमा उजागर गरेको र व्यवहारदेखि परमात्मासम्मको सम्बन्धलाई पद्यात्मकरूपमा वर्णन गरेको हुँदा यो काव्यले अन्य काव्यहरूभन्दा विशेष महत्व बोकेको छ । एक कुशल गृहस्थीले कसरी जीवन सफलतापूर्वक निर्वाह गर्दछ र परिवारको कुनै एक सदस्यको शरीर शान्त भएपछि गृहस्थाश्रममा कस्तो हलचल उत्पन्न हुन्छ भन्ने यथार्थता यस काव्यको अध्ययनबाट देखिन्छ । वैदिक सनातन धर्मका अनुयायी र अनवरत सँगसँगै अद्वैतवेदान्तको अभ्यास गरिरहने दम्पतीको ७२ वर्षको जीवन अत्यन्त उदाहरणीय र अनुकरणीयसमेत देखिन्छ । यस्ता आदर्श दम्पती मध्ये आफ्नी सहचारिणी आदर्श पत्नीको बीचैमा अवसान भएका कारण त्यसबाट उत्पन्न शोकजन्य कुण्ठालाई अपमार्जन गर्न यो काव्यको सिर्जना भएको भन्ने मलाई लाग्दछ । त्यसै कारण यो काव्य अत्यन्त हृदयस्पर्शी र

मार्मिक हुन गएको देखिन्छ। करुणरसप्रधान यो काव्य अद्वैत वेदान्तका सिद्धान्तहरूबाट पूर्वापर अनुस्यूत हुन गएको छ।

आदरणीय लेखक श्रीभट्टराईज्यूमा पर्न गएको असाधारण चोट तथा अपूरणीय क्षतिलाई उहाँले पद्यात्मक कवितामा उतार गर्नुभएको वास्तविकतालाई अध्ययन गर्दा जो कसैको पनि मन व्यतित हुन सक्तछ। काव्यको सुरु सुरुमा एक सामान्य व्यवहारमा बसेको व्यक्तिले पत्नी वियोगमा गर्ने सरहकै शोक लेखकज्यूबाट गरिएको जस्तो लागेता पनि वस्तुतः अध्ययन गर्दै जाँदा यो शोककाव्य नभएर केवल स्मृतिकाव्यको रूपमा रचना गरेको प्रष्टै बुझिन्छ । यस काव्यका रचनाकार स्वयं वेदान्तका एक प्रकाण्ड विद्वान् हुनुभएको हुँदा यस स्मृतिकाव्यमा वेदान्तका सिद्धान्तहरू ओतप्रोत हुनु स्वभाविकै हो । गृहस्थाश्रममा बसेपछि जतिसुकै अद्वैत वेदान्तको ज्ञान भएता पनि आफ्नी सहचरी धर्मपत्नीको अवसानले कति मर्माहत गराउँदोरहेछ भन्ने कुराको ज्ञान पनि यस काव्यबाट पाउन सकिन्छ।

यस संसारमा अवतरित भगवान् श्रीरामलाई पनि वनवासको समयमा सीतासँग विछोड हुँदा अत्यन्त मानसिक दुःख भएको थियो भने उहाँका पितामह चक्रवर्ती राजा अजकी रानीको असामयिक निधनबाट उहाँले प्रयागको त्रिवेणीस्थित भीरबाट हामफालेर आत्महत्या गरेको समेत रघुवंश महाकाव्यबाट देखिन्छ। अतः त्यस अवस्थामा पुगेका सबै गृहस्थ पुरुषहरूका लागि धैर्यधारणा गरेर प्राब्धले दिएको जीवन व्यतित गर्नु नै श्रेयस्कर हो भन्ने यो काव्यले सन्देश दिएको देखिन्छ।

काव्यको सुरुमा एक गृहस्थको जीवनसँगमात्र सम्बन्धित जस्ता देखिने श्लोकहरू पछि पछि गएर वैदान्तिक हुँदै गएको देखिन्छ। एक कुशल गृहस्थले व्यवहारिक रूपमा निर्वाह गर्नुपर्ने आफ्नो व्यवहारिक धर्म तथा कर्तव्यपालन र पारमार्थीक सत्तामा यस्ता परिस्थितिको महत्व के हुन्छ भनी प्रस्तुत स्मृति-काव्यमा तलको कारिकाले छर्लङ्ग पारेको

देखिन्छ –

संसार हो भयद जन्म र मृत्युपूर्ण
जन्मेर फेरि यस भित्र हुँदैन पर्न ।
तस्मात् तिमी पनि न जन्मनु पार तर्नु
इच्छा पुनर्मिलनको कहिल्यै नगर्नु ॥ (कारिका ५४५)

एक गृहस्थदेखि लिएर एक वैदान्तिक व्यक्तित्व समेत सबैले पढ़्न योग्य रहेको यस काव्यमा चारै वेदका महावाक्यहरूलाई छोटकरीमा पद्यद्वारा वर्णन गरिएको देखिन्छ । उदाहरणका लागि कैवल्यमुक्ति, भूमाविद्या, ब्रह्मविद्या आदिजस्ता विषयहरूलाई लिन सकिन्छ । यो स्मृतिकाव्य अन्य साधारण काव्यहरूभन्दा पृथक् भएकाले यसलाई अतुलनीय काव्यका रूपमा लिन सकिन्छ। ॐ ब्रह्मार्पणमस्तु ।

विभुप्रसाद अर्याल
अद्वैत वेदान्त सदन
जावलाखेल, ललितपुर



# अन्तिम श्रद्धाञ्जलि

अहिले भूमिकाको रूपमा केही लेख्न म कलम लिएर बसेको छु, तर के लेखौँ ? मनमा केही पनि स्फुरण भइरहेको छैन । म एक्लै आफ्नै शयनकक्षामा बसेर अन्यमनस्क हुँदै केही पङ्क्ति कोरिहेको छु । वास्तवमा मेरो लेख्ने जाँगर, उत्साह र शक्ति समेत दिनानुदिन क्षीण हुँदै गइरहेको मैले महसूस गर्दै आएको छु ।

यो सारा संसार, यो सम्पूर्ण चराचर कालको वशमा छ तर काल भने कसैको वशमा छैन । काल भनेको नै परमात्मा परब्रह्म हो । त्यो परब्रह्म प्रत्येक चर प्राणीका भित्र प्रतिबिम्बत्वेन चेतनाका रूपमा रहन्छ र बाहिर भने काल अर्थात् समयका रूपमा रहेर साराको आयुलाई समाप्त गरिरहेको हुन्छ । यसै कालले प्रत्येक प्राणीमा षड्भावविकारका रूपमा रहेर प्राणीलाई जन्माएर मृत्युसम्म पुऱ्याउने गर्दछ । अचर पृथ्वी आदि वस्तुमा भने त्यो परमात्मा अन्तर्यामीका रूपमा प्रत्येक अचर वस्तुका भित्र बसेर तिनलाई सञ्चालन गरिरहेको हुन्छ । किन्तु जड भएका हुँदा तिनलाई ज्ञान हुँदैन ।

यो मायिक सारा चराचरात्मक संसार काल अर्थात् मृत्युका वशमा छ र अन्ततः त्यस काललाई पनि परब्रह्मले समाप्त गरिदिन्छ । यसैलाई श्रुतिले यसरी भनेको छ –

यस्य ब्रह्म च क्षत्रञ्च उभे भवत ओदनः ।
मृत्युर्यस्योपसेचनं क इत्था वेद यत्र सः ॥ (कठोपनिषद् १।२।२५)

जुन परब्रह्मका लागि चेतनतत्त्व अर्थात् सम्पूर्ण चेतन प्राणी र अचेतन तत्त्व अर्थात् सारा मायिक ब्रह्माण्डसमेत भातजस्तो खाद्यपदार्थ बन्दछ भने सारा प्राणीको भक्षक, संहारक काललाई पनि अचार र तरकारी खाएझैँ गरेर परमात्मा परब्रह्मले भातसित खाइदिन्छ ।

प्राणीहरूका लागि कालभन्दा माथि कोही पनि छैन तर त्यो सर्वभक्षक काल पनि प्रकारान्तरले परब्रह्म नै भएको तथ्य उपर्युक्त श्रुतिबाट थाहा हुन्छ। मैले यो कुराको सङ्केत इन्दिरा स्मृति–काव्यमा गर्ने प्रयास गरेको छु। जब सम्पूर्ण चराचर संसार परब्रह्मस्वरूप कालबाट ग्रसित छ भने मेरी अर्धाङ्गिनी इन्दिरालाई पनि उसै कालस्वरूप ब्रह्मले नै ग्रसित बनाएर अर्थात् आफू जस्तै पूर्ण बनाएर जन्म र मृत्युको अनन्त दुश्चक्रबाट छुट्कारा दिएको हो भन्ने मैले विश्वास गरेको छु। श्रुतिले भनेको पनि छ –

पूर्णमदः पूर्णमिदं पूर्णात्पूर्णमुदच्यते।
पूर्णस्य पूर्णमादाय पूर्णमेवावशिष्यते ॥

– बृहदारण्यकोपनिषद् ५।१।१

मेरा तत्कालीन वियोगजन्य संवेग, वेदना, निरीहता, विरक्ति, रिक्तता, संयोग, वियोग इत्यादि मानसिक भावना केही अंशमा भए पनि मैले काव्यमा उल्लेख गर्ने प्रयास गरेको छु। किन्तु त्यस वेलाको मेरो अति सन्तप्त मनको व्यथालाई मैले जस्ताको तस्तै काव्यमा उतार्न सकेजस्तो लाग्दैन। ममा सही शाब्दिक तथा आलङ्कारिक ज्ञानको अभाव, शब्दविन्यास र शब्दचयन गर्ने क्षमताको अभावले गर्दा मेरो वियोगजन्य शोक र अतल मनको संवेगलाई मैले काव्यमा जस्ताको तस्तै व्यक्त गर्न नसकेको मेरो अक्षमतालाई मैले स्वीकार्नै पर्दछ। चेतन र अवचेतन मनमा रहेको भावलाई मैले काव्यमा यथार्थरूपमा चित्रण गर्न सकिन। जबसम्म कुनै पनि मनुष्यले आफ्ना चेतन, अवचेतन र अर्धचेतन मनको अतल गहिराइमा वा संस्कारमा टाँसिएर बसेको सुख, दुःख, डर, त्रास, हर्ष, विस्मय, मोह, शोक, संवेदना, व्याकुलता आदिलाई त्यहाँबाट सम्पूर्ण रूपमा प्रक्षालन गरेर मन अर्थात् अन्तःकरणलाई शुद्ध र स्वच्छ पार्न सक्तैन तबसम्म त्यस व्यक्तिलाई कुण्ठा र अवसादरहित मान्न नसकिने प्राचीन तथा अर्वाचीन पूर्वीय तथा

पाश्चात्य विद्वान्‌हरूको मत पाइन्छ।

जसरी पेटमा जमेको मललाई विभिन्न पञ्चकर्मादि उपायद्वारा विरेचन वा Purgative द्वारा Purge गरेर पेटबाट जबसम्म बाहिर निकालिँदैन तबसम्म यो पाञ्चभौतिक शरीर स्वस्थ हुन सक्तैन भन्ने प्राच्य आयुर्वेदका विद्वान्‌हरूको र आधुनिक एलोपेथीक चिकित्सकहरूको भनाइ पाइन्छ। त्यसरी नै मनमा जमेर बसेका मोह, शोकादिलाई मनबाट प्रक्षालन गरेर जसले फ्याक्न सक्तैन त्यसलाई मानसिक रूपमा पूर्ण स्वस्थ मान्न सकिँदैन।

हाम्रा प्राच्य आयुर्वेदका विद्वान्‌हरूले स्थूलशरीरभित्र रहेको मललाई बाहिर फ्याँकेर स्वस्थ रहन विरेचन अर्थात् जुलाफ लिनुपर्छ भनेका छन् भने धर्मशास्त्रले वेदविहित कर्म गरेर मनको अशान्ति हटाउने भनेको छ। भक्ति शास्त्रले चाहिँ आफ्नो उपास्यको एकाग्र मन गरेर अनन्याभक्ति गरेमा मनको अशान्ति समाप्त हुन्छ र अन्तमा त्यो भक्त उपास्यका लोकमा जान्छ भनेको छ।

मनलानई स्वच्छ एवं मलरहित बनाउनु पर्दछ भन्ने पाश्चात्य ग्रीसका प्राचीन दार्शनिक विद्वान् Aristotle र आधुनिक मनोवेत्ताहरूको भनाइ पनि पाइन्छ, जुन यस प्रकार छ – Catharasis is purification, evacuation of the bowels, purification of the emotions, as by the drama according to Aristotle : (Psych) the puring of the effects of a pent-up emotion, by bringing them to the surface of consciousness.

अद्वैत वेदान्तमा भने मनको शान्तिको पराकाष्ठा नै मुक्ति हो। किनभने निरतिशय मोक्षका लागि वेदान्तले मुमुक्षुका चित्तशुद्धिका लागि सर्वप्रथम भगवद् अर्पित निष्काम कर्म गर्नुपर्दछ भनेको छ। चित्तको मलदोष हटेपछि चित्तको विक्षेपदोष हटाउन मुमुक्षुले भगवान् श्रीनारायणको वा

आफ्ना उपास्यको अहैतुकी र अप्रतिहता तथा अनन्या भक्ति गर्नुपर्दछ। यसबाट चित्तको विक्षेप पूर्णरूपमा शान्त हुन्छ र मोक्ष मार्गको अधिकारी हुन्छ। यस अवस्थामा पुगेका मनुष्यका चित्तमा काम, क्रोध, लोभ, मोह, मात्सर्य, मद, शोक, कामना, एषणा, असूया आदि कुनै पनि दोष रहँदैनन् र मनुष्य पूर्ण शान्त हुन्छ। मन नै सारा दुःखको कारण हो र बन्धन तथा मोक्षको कारण पनि मन नै हो। शास्त्रले भनेको पनि छ –

'मन एव मनुष्याणां कारणं बन्धमोक्षयोः।
बन्धाय विषयासक्तं मुक्त्यैर्निर्विषयं मनः ॥' – शाट्यायनीयोपनिषद् १

वास्तवमा मान्छे विना होस र विना लक्ष्य विहानदेखि साँझसम्म अर्थात् जन्मेदेखि मृत्युपर्यन्त संसाररूपी भवाटवीमा दौडिरहेको हुन्छ मदमत्त भएर रक्सी पिएको मान्छे झैँ गरेर। यसै कुरालाई भर्तृहरिःले यसरी वर्णन गर्नुभएको छ –

आदित्यस्य गतागतैरहरहः सङ्क्षीयते जीवितम्,
व्यापारैर्बहुकार्यभारगुरुभिः कालोऽपि न ज्ञायते।
दृष्ट्वा जन्मजराविपत्तिमरणं त्रासश्च नोत्पद्यते,
पीत्वा मोहमयीं प्रमादमदिरामुन्मत्तभूतं जगत् ॥
– वैराग्यशतकम् ४२

मेरी अर्धाङ्गिनीसँग मेरो बिछोड भएको झण्डै ३ महिनासम्म ममा वैक्लव्यले घर गरिरह्यो। किंकर्तव्य विमूढ भएर मैले शून्यता र रिक्तताको अनुभव गरिरहेँ। यस पीडाको अवस्थामा मलाई मेरा छोराबुहारी, छोरी, स्वजन र परिजनहरूले सम्हाले र यो अकर्मण्यतालाई त्यागेर पूर्ववत् सिर्जनशील हुन आग्रह गरे। त्यस आग्रहलाई स्वीकार गर्दै मैले मेरो अन्तस्मा व्याप्त वियोगजन्य पीडालाई परिमार्जन गरेर जानेलाई बिस्तारै विस्मृतितर्फ लैजान श्रद्धाञ्जलिका रूपमा उनका नाममा यस 'इन्दिरा स्मृति–काव्य'को लेखन शुरु गरेँ। यसबाट मेरा अन्तःकरणमा जमेर

रहेका शोक, मोह आदिका साथै जानेको अनवरतको स्मरण, शून्यता, रिक्तता, एक्लोपन र भविष्यप्रतिको भय बिस्तारै कम हुँदै गएको ममा अनुभव हुँदैगयो । एकप्रकारले भ्रण्डै भ्रण्डै म पहिले जस्तै भएर यी पङ्क्तिहरू लेखिरहेको छु। जानेलाई श्रद्धापूर्वक पुण्यतिथिमा सम्भने र अघिपछि व्यावहारिक भएर ८५ वर्षकै उमेर भए पनि प्रारब्धले दिएको आयु विना शोक, रोग, विना चिन्ता र विना तनाव अनवरत ब्रह्मचिन्तन गरेर आरामपूर्वक बाँच्ने निश्चय मैले गरेँ।

जानेलाई सधैँ संभ्रेर जीवन चल्न पनि ता सक्तैन। अन्ततः प्राणी बाँच्नका लागि स्वार्थी नै त हुन्छ। श्रुतिले भनेको पनि छ – "न वा अरे पत्युः कामाय पतिः प्रियो भवत्यात्मनस्तु कामाय पतिः प्रियो भवति। न वा अरे जायायै कामाय जाया प्रिया भवत्यात्मनस्तु कामाय जाया प्रिया भवति इत्यादि ।

निश्चय नै पतिका लागि पति प्रिय हुँदैनन् भने आफ्ना नै स्वार्थका लागि पति प्रिय हुन्छन्। पत्नीका लागि पत्नी प्रिया हुन्नन्  भने आफना नै स्वार्थका लागि पत्नी प्रिया हुन्छिन् । यसै गरेर छोरा, धन, ब्राह्मण, क्षत्रिय, लोक, प्राणी लगायतका सबै वस्तुहरू आफ्नै लागि प्रिय हुन्छन् भन्दै अन्तमा श्रुति भन्छ – आत्मा वा अरे द्रष्टव्यः श्रोतव्यो मन्तव्यो निदिध्यासितव्यो मैत्रेय्यात्मनो वा अरे दर्शनेन श्रवणेन मत्या विज्ञानेनेदं सर्वं विदितम्। (बृ.उ.२।४।५) हे मैत्रेयि! यो आत्मा नै दर्शनीय, श्रवणीय, मननीय र ध्यान गर्न योग्य हो। हे मैत्रेयि! यसै आत्माको दर्शन, श्रवण, मनन एवं विज्ञानद्वारा यी सबैको ज्ञान हुन्छ।

यही श्रुतिवाक्यलाई ब्रह्मवाक्य मान्दै अन्तमा ब्रह्मलीन भइसकेकी मेरी प्रिया धर्मपत्नी इन्दिरा भट्टराईलाई अन्तिम श्रद्धाञ्जलि स्वरूप यो 'इन्दिरा स्मृति-काव्य' अर्पण गर्दै यो मेरो अन्तिम श्रद्धाञ्जलिलाई यहीँ पूर्णविराम दिन्छु। यस काव्यका प्रकाशक तथा प्रकाशिका पुत्र, पुत्रवधू,

छोरी, नाति, नातिनी, पनाति, पनातिनी तथा जुवाइँहरू सबै प्रिय स्वजनमा हार्दिक कृतज्ञता अर्पण गर्दछु ।

अन्तमा यस काव्यको परिमार्जनका साथै सम्मति प्रदान गर्नुहुने उपप्राध्यापक रोहिणीराज तिमल्सिनाज्यू, वेदान्तसदनका सञ्चालक विभुप्रसाद अर्यालज्यू र यस काव्यलाई प्रकाशनयोग्य बनाइदिनुहुने खड्गप्रसाद खनालज्यूलाई पनि हार्दिक धन्यवाद दिन्छु र कृतज्ञता ज्ञापन गर्दछु । ॐ ब्रह्मार्पणमस्तु ।



# विषयसूची





# इन्दिरा
# स्मृति-काव्य

**बुद्धिसिद्धिप्रदाता हुन् शारदा गणनायक ।**
**प्रणाम गर्छु श्रद्धाले दुवैमा भक्तिपूर्वक ॥**

**गुरुमातापिता सम्झी स्मृतिकाव्यादिसिर्जन ।**
**गरी श्रद्धाञ्जलि अर्पें पैले भावुक भैकन ॥**
**अहिले धर्मपत्नीका सम्झना निम्ति काव्य यो ।**
**लेखी श्रद्धाञ्जलि दिन्छु 'इन्दिरास्मृतिकाव्य' यो ॥**

## पहिलो स्मृतिपुष्प – संयोग

जन्मेँ म ब्रह्मकुलमा शुरुबाट मैले,
शिक्षा लिएँ सुगुरुबाट सबै क्रमैले ।
यज्ञोपवीतपछि वेद पिताजीबाट -
मैले पढेँ प्रथम संस्कृत रुद्रबाट ॥
(१)

सम्झन्छु यो अघि म शैशव बाल्यलाई,
बाख्रा र गौसँग घुमेँ वनमा रमाई ।
साथीहरूसँग हरेगुडु खेल खेल्थेँ,
राम्रो घना वन घुमीं अति मस्त हुन्थेँ ॥
(२)

पढ्दै थिएँ म सहसा अनजानमा नै,
मेरो विवाह हुन गो तब खेलमा नै ।
आइन् वधू घर पसिन् अति लाज मानी,
गर्दै गइन् सकल कर्म सुकर्म ठानी ॥
(३)
ती पातली र सुकुमार थिइन् नवीना,
बन्दै गइन् स्वगृहकृत्यविषे प्रवीणा ॥
सुम्पेर भार घरको सब इन्दुलाई,
दिङ्ला गएँ म तब संस्कृत पढ्नलाई ॥
(४)
आएँ म पढ्न पछि संस्कृत राजधानी,
विद्या पढेँ मन दिई द्विजकृत्य ठानी ।
वेदान्तसाथ अनि आङ्ग्ल दुवै पढेर,
जागीर खान म गएँ घर सम्झिएर ॥
(५)
ठूलो दशैँ घर गएँ शुभ-पर्व पारी,
माता-पिता स्वजन भेट्न गरी तयारी ।
टीका-प्रसाद-जमरा सब मान्यबाट,
पाएँ शुभाशिष ठुलो गुरुवर्गबाट ॥
(६)
त्यौहारमा म बहिनीजन आदिबाट,
टीका र हार पहिरी अति स्नेहसाथ ।
हीडेँ म मान्यजनबाट बिदा भएर,
छोरी र इन्दुगृहिणी सँगमा लिएर ॥
(७)

आएर तेह्र दिनमा अति कष्टसाथ,
डेरा लिएर बसियो सुखदुःखसाथ।
बित्दै गए दिनहरू नगरेर बेर,
जन्मिन् कनिष्ठ तनया सविता बनेर॥

(८)

जन्मे सुपुत्र पनि तीन सुयोग्य पूर्ण,
गार्हस्थ्य जीवन भयो क्रमले प्रपूर्ण।
जागीरमा म बढुवा क्रमले भएर,
घुम्थेँ स्वदेश र विदेशहरू गएर॥

(९)

यै बीचमा तनय ती तनयाहरूको,
शिक्षा विवाह शुभ-कर्म भयो सबैको॥
छन् भित्र बाहिर सबै परिवारसाथ,
बस्छन् स्वकर्मरत भैकन शान्तिसाथ॥

(१०)



# दोस्रो स्मृतिपुष्प – वियोग

जागीरमा दिन पुगी अवकाश पाई,
बस्थेँ म इन्दुसँगमा घरमा रमाई ।
यै बीचमा निठुर काल लुकेर आई,
टप्पै टिपीकन लग्यो प्रिय इन्दुलाई ॥

(११)

जोडी दुई ढुकुरका सरि साथ बस्थ्यौँ,
हावा हुरी र असिना सहजै सहन्थ्यौँ ।
आवास सानु घर दिव्य निवास ठानी,
काट्थ्यौँ जराज्वरित यो वय हर्ष मानी ॥

(१२)

चौरासिको वय भई सँगमा दुवैले,
गर्दैथियौँ व्रत र पूजन ती क्रमैले ।
त्यो पूर्ण नै हुन नदीकन काल आई,
पत्नी लग्यो ढुकुरकी सरि इन्दुलाई ॥

(१३)

एक्लै छु आज दिनरात भएर लामा,
जाँदैन यो समय इन्दु हिँडीदिँदामा ।
पोखौँ कहाँ म कसमा मनको अशान्ति,
देला हरे ! मकन को ? अब पूर्ण शान्ति ॥

(१४)

प्रारब्धलभ्य वय लीकन बाँच्नुपर्छ,
पर्खेर काल तन जर्जर साँच्नुपर्छ ।

क्यै काम छैन अब जीवन बाँच्नलाई,
बाँचेर भार परिवार समाजलाई ।।
(१५)
यात्री थिइन् गइसकिन् किन शोक गर्छु ?
वेदान्त नै सब भुलेँ कि ! म छक्क पर्छु ।
यो भ्रान्ति हो भ्रम सबै अनि तुच्छ भान,
यो प्रातिभासिक असत् सपनासमान ।।
(१६)
आयौँ बस्यौँ सँगसँगै अति लामु काल,
यो ग्राम्य तुच्छ सुखको नबुझ्केर चाल ।
यस्मै रम्यौँ सकल जीवन भो तमाम,
होसै भएन लिनुपर्दछ रामनाम ।।
(१७)



# तेस्रो स्मृतिपुष्प – अज्ञान

कालो छ रात तमसावृत देख्छु सारा,
यै रातले निलिदियो जिउने सहारा ।
योबाट नै सकल सृष्टि हुने अचम्म,
भ्रान्ति गराउँदछ रज्जु र सर्पसम्म ॥
(१८)

अज्ञान हो तमस यो भ्रम हो अपार,
आभासजन्य अवभासहरू हजार ॥
यैबाट नै सब चराचर सृष्टि हुन्छ,
यै ब्रह्मकी सृजनशक्ति भनी लिइन्छ ॥
(१९)

सद्भिन्न हो तम असत् पनि हैन खास,
यो सत् असत् पनि त हैन कहाँ छ वास ।
उत्पत्ति हुन्छ कसबाट र मिल्छ कस्मा,
गाह्रो छ भन्न नबुझीकन झट्ट यस्मा ॥
(२०)

त्यो रातको मलिमसा कसबाट आई,
त्यो प्रातमा सहज जान्छ सबै हराई ।
यस्को यथार्थसँग उत्तर मिल्न गाह्रो,
अज्ञानको छ अझ उत्तर जान्न गाह्रो ॥
(२१)

अज्ञान बुझ्नकन 'आश्रय' बुझ्नुपर्छ,
'आकृष्ण'बाट रजनी तम हो बुझिन्छ ।

धौ बुझ्न भो जड दुवै रजनी अविद्या,
बुझ्ने प्रकाश कसरी शुभ शुभ्रविद्या ॥
(२२)

हे इन्दु ! यी सकल शास्त्र सुनाउँथेँ म,
सुन्थ्यौ तिमी सहचरी र रमाउँथे म ।
छैनौ तिमी गइसक्यौ कसमा सुनाऊँ ?
एक्लैछु सुन्छ कसले कसरी रमाऊँ ?
(२३)

गोमासरी म कसरी जडमा सुनाऊँ ?
वेदान्तको श्रवण लौ कसमा गराऊँ ?
छैनौ तिमी प्रियसखी सब शून्य ठानी,
लौ धान्न मुश्किल भयो अब जिन्दगानी ॥
(२४)



# चौथो स्मृतिपुष्प – वेदना

तिम्रो छ यष्टि अहिलेतक इन्दु ! टेक्छु,
त्यै यष्टिमा प्रियतमे ! म झलक्क देख्छु ।
सन्तोष गर्छु यसमै अनि काव्य लेख्छु,
त्यै काव्यमा प्रियतमे ! म झलक्क देख्छु ।।

(२५)

हो काल शाश्वत भयानक विश्वजेता,
यो जित्ननिम्ति हुनुपर्दछ नाचिकेता ।
त्यो ब्रह्ममात्र जडचेतन पार्छ नाश,
त्यै काल नै तिउन पार्दछ एक गाँस ।।

(२६)

त्यै कालको कवल भैकन मेरी जाया,
छोडी गइन् निठुर भै नगरेर माया ।
एक्लो भई शिमलको रुखतुल्य नै छु,
हावा प्रचण्ड हुरिका सँग बाँचिरेछु ।।

(२७)

सन्तान छन् घरसँगै परदेशसम्म,
एक्लै भए सरह ठान्दछु के अचम्म ?
लागेँ पचासि तन रुग्ण छ जीर्ण-शीर्ण,
बाँच्तो छु औषधि लिएर भई विदीर्ण ।।

(२८)

हो काल निर्मम निरङ्कुश हृद्विहीन,
आब्रह्म कीटतक भक्षण गर्छ दीन ।

योबाट रक्षण कतैतिरबाट हुन्न,
डर्दैन काल र कसैसँग यो नुहुन्न ॥
(२९)
हेर्दै थिएँ चमक इन्दुसँगै हरायो,
मेरो कठै सुमन तत्क्षण ओइलायो ।
काम्यो शरीर सब थर्थर होस भाग्यो,
धर्ती फुटिन् र शिरमा दृढ वज्र लाग्यो ॥
(३०)
रोऊँ कराउँ म तिमी अब फर्किइन्नौ,
भेट्ने प्रयास म गरौँ जति भेटिइन्नौ ।
हिँड्दैथियौँ सँगसँगै तर आज चट्ट,
छोडी गयौ सहचरी ! किन आज झट्ट ॥
(३१)
भान्सा गई सकल भोजन जो पकाई,
खान्थ्यौँ बसी सँगसँगै बहुतै रमाई ।
हाम्रो थियो नियम दैनिक हे पियारी !
छोडी गयौ प्रियतमे ! अलपत्र पारी ॥
(३२)
छन् कांस्य थाल दुइटा तिनमा सदैव,
खान्थ्यौँ सँगै प्रियसखे ! जति दिन्छ दैव ।
ऐले तिमी गइसक्यौ कसरी म खाऊँ ?
बुझ्दैन चित्त अब यो कसमा सुनाऊँ ?
(३३)



# पाँचौँ स्मृतिपुष्प – भ्रान्ति

कस्तो मायिक हो भ्रान्ति वैकल्य सहसा बढ्‌यो ?
मोह दुर्जय हो कस्तो ? मनमस्तिष्कमा चढ्‌यो ॥
(३४)
थिइन् इन्दु कहाँ पैले ? कुन प्रारब्धले गरी ।
मेरी पत्नी भइन् आइन् व्यर्थ हो सपना सरी ॥
(३५)
न पैले ती थिइन् साथ ती छैनन् अहिले पनि ।
वृथा हो बीचमा मिल्नु भन्छ माण्डूक्यले पनि ॥
(३६)
यद्वा पुरुरवाजस्तो उर्वशीवशमा परी ।
म डुबेँ भ्रम मायाका स्वप्नसंसारमा परी ॥
(३७)
पुरञ्जनसरी यद्वा बुद्धि पुरञ्जनीसँग ।
रमाएँ वशवर्ती भै परेँ लट्ठ उनैसँग ॥
(३८)
जन्माएँ पुत्रपुत्री ती माया पुरञ्जनी लिई ।
आफ्नो बाटो सबै लागे बुद्धिमाया मरी गई ॥
(३९)
सम्झी पुरञ्जनीलाई अति आसक्त ली मन ।
पुरञ्जन मरे जन्मे उनी नारी भईकन ॥
(४०)

अन्ततः उनले भेटे सखा साक्षी सनातन ।
पुरञ्जन प्रतिबिम्ब मिले बिम्ब भईकन ॥
(४१)

बिम्ब हो साक्षी सद्ब्रह्म प्रतिबिम्ब पुरञ्जन ।
भन्ने बिर्सेर नै जीव सधैँ घुम्दछ फन्फन ॥
(४२)

अहिले म स्वयं त्यस्तै पुरञ्जनसरी बनी ।
शोकाकुल भएको छु सम्झी इन्दुपुरञ्जनी ॥
(४३)



# छैटौँ स्मृतिपुष्प – ब्रह्मचिन्तन

मिथ्या संसार बिर्सेर म हुँ ब्रह्म सनातन ।
भन्ने सम्झनु नै पर्छ यै हो यथार्थ चिन्तन ॥
(४४)
पैले ब्रह्म थिएँ सत् चित् फेरि ज्ञान गरीकन ।
म फेरि ब्रह्म नै बन्छु गरेर ब्रह्मचिन्तन ॥
(४५)
अन्यथा तल झर्नेछु राजा भरतका सरी ।
क्षण ती बिर्सनै पर्छ एकाग्र मन यो गरी ॥
(४६)
बिर्सनै पर्छ मैले ती त्रासदीपूर्णका क्षण ।
मेरी इन्दु भइन् सच्चित् पूर्ण ब्रह्म सनातन ॥
(४७)
जन्मने मर्नु नै पर्छ मर्ने जड शरीर हो ।
जीव मर्दैन अध्यासजन्य यो भ्रममात्र हो ॥
(४८ )
ब्रह्मज्ञानार्थ नै मैले छैटौँ दशक नै तक ।
गुरुबाट पढे पश्चात् अन्तिम ग्रन्थका तक ॥
(४९)
ब्रह्माभ्यास गरेँ लेखेँ पढेँ मैले सकेजति ।
अद्वैतसिद्धिदेखिन् नै अनुवाद गरेँ कति ॥
(५०)

निबन्धग्रन्थमा ब्रह्मसाक्षात्कार गरी शुरु ।
लेखेँ परमसद्ग्रन्थ ब्रह्मविद्यासँगै अरू ॥
(५१)

पराविद्या हुँदै आयो औपनिपुरुषै पनि ।
ऋते ज्ञानान्न मुक्तिको प्रकाशन भयो अनि ॥
(५२)

अर्को मौलिक सद्ग्रन्थ निबन्धग्रन्थरूपमा ।
आयो वेदान्तचम्पू त्यो गद्यपद्यस्वरूपमा ॥
(५३)

महावाक्य भनी आयो निबन्धग्रन्थ मौलिक ।
साक्षात् यो मुक्तिको हेतु हो साधन अलौकिक ॥
(५४)

आयो उपनिषत्सार यसैमा कारिका पनि ।
संस्कृतानुवादमा आयो कारिका रूपमा अनि ॥
(५५)

ब्रह्मसूत्रविषे सार कारिका अनुवादन ।
भयो संस्कृतभाषामा लक्ष्मीकृपा मिलीकन ॥
(५६)

सङ्क्षेपशारीरसार प्रकाशन भयो अनि ।
यस नै बीचमा आए निबन्ध कविता पनि ॥
(५७)

यस्तो गहनतासाथ अभ्यास अनि लेखन ।
गर्दागर्दै गइन् पत्नी ब्रह्मलीन भईकन ॥
(५८)

पऱ्यो हृदयमा घात यी सारा नसुनीकन ।
गइन् सहचरी मेरी अति विह्वल भो मन ।।

(५९)

कस्तो यस्तो भ्रम र भयले पूर्ण संसार हो यो,
मायाद्वारा सृजित भव यो दुःखको द्वार हो यो ।
यस्तो ठानी दृढतर भई फेरि जागा भएर,
ब्रह्मै बन्ने दृढ मन लिएँ हुन्छु चाँडै तयार ।।

(६०)

यस्तो शोची मम र ममता शोक सन्ताप फाली,
उठ्ने चेष्टा झटपट गरी मोह दैन्यादि फाली ।
ऐले चौथो चरम वयमा भित्र पारेर शुद्ध,
मैले भित्री दृढ सुर कसेँ ब्रह्म बन्ने विशुद्ध ।।

(६१)



# सातौँ स्मृतिपुष्प – शरणागति

फर्कन्न कहिल्यै जाने कहाँ जान्छ कता कता ।
जस्तै सागरमा हुन्छ जलको बिन्दु बेपता ॥
(६२)
जति रोऊँ कराऊँ म बिलाप जति नै गरौँ ।
जाने फर्केर आउन्न प्रतीक्षा जति नै गरौँ ॥
(६३)
सृष्टिका शुरुदेखिन् नै जाने फर्केन क्वै पनि ।
यो रुन्चे मन मान्दैन पर्खेर बस्छ तै पनि ॥
(६४)
अहो कष्ट अहो कष्ट महा कष्ट सधैँभरि
कष्ट तापहरू बोकी हामी बाँच्छौँ सधैँभरि ॥
(६५)
कसलाई दिने दोष आफ्नै प्रारब्धले गरी ।
म हुँ जन्मन आएको पञ्चाग्निगर्भमा परी ॥
(६६)
योनि आयु सँगै मृत्यु सुखदुःखहरू पनि ।
प्रारब्धबाट पाइन्छन् मेरै कमाइ हुन् यिनी ॥
(६७)
रातले चन्द्रमालाई फेरि फर्केर पाउँछ ।
जोडीलाई चखेवाले फेरि भेटी रमाउँछ ॥
(६८)
आउँछन् सब फर्केर फर्किन्नौ किन हो तिमी ?
प्रतीक्षारतछु इन्दु ! बुझ्न सक्तच्यौन खै तिमी ॥
(६९)

गुरु बाला पितामाता दिदी दाजु कुनै पनि ।
गएका फर्किएनन् ती के फर्क्यौली तिमी पनि ?
(७०)
आशा गर्दछु फर्किन्छ्यौ मेरी प्यारी कुनै दिन ।
तिमी फर्कनु नै पर्छ नयाँ शरीर लीकन ।।
(७१)
चितामा भस्म भो तिम्रो जीर्ण शरीर जर्जर ।
नयाँ शरीरका साथ आऊ बनेर निर्जर ।।
(७२)
गर्न स्वागत हे देवि ! छौँ तयार सबै जन ।
सरासर तिमी आऊ अति प्रफुल्ल भैकन ।।
(७३)
जाने फर्केर आउन्नन् भन्ने प्रावाहणी मत ।
झूटो पारी तिमी आऊ आऊ हे इन्दु ! हत्पत ।।
(७४)
वेदादि शास्त्रले जे जे भने ता पनि कृष्णले ।
ल्याए दाजुहरू भन्छ गुरूपुत्र पुराणले ।।
(७५)
यमबाट लिई फर्किन् दमयन्ती सिधै पति ।
उदाहरण पाइन्छन् पुराणादिकमा कति ।।
(७६)
त्यसैकारणले आऊ घर भित्र सरासर ।
हे इन्दु ! मान्नुपर्दैन कसैको त्रास या डर ।।
(७७)

तिमीले सुन्न बाँकी छ अझै वेदान्तको मत ।
महावचन हे इन्दु ! सुन्न बाँकी छ तत्त्वतः ॥
(७८)
आऊ सरासरी आऊ नयाँ शरीर लीकन ।
प्रतीक्षारत छौँ हामी छोराछोरी सबै जन ॥
(७९)
तिम्रा आसन ओछ्यान ती अझै पनि खालि छन् ।
सिर्जना सब तिम्रै हो घरमा जति वस्तु छन् ॥
(८०)
पोखेँ सुतप्त मनको भ्रम यो गुनासो,
बन्ला यही अबुझ निम्ति अवस्य हाँसो ।
लेखौँ अझै कति कुरा मनमा भरी छन्,
लेखिन्न यो कलमले जति भावना छन् ॥
(८१)
एक्लै म विक्लव भईकन नित्य बस्छु,
काटिन्न यो समय नै जति काट्न खोज्छु ॥
लेखौँ अझै प्रियतमे ! छ हुने अनन्त,
यो काव्य हो सकलको कहीँ हुन्न अन्त ॥
(८२)
संसार हो भ्रम यसै बीच भासिँदोछु,
उद्धार गर्छ कसले म निसासिँदोछु ।
हो ब्रह्म एक सबमा सबको सहारा,
उस्कै परेँ शरण भक्ति र बोधद्वारा ॥
(८३)



# आठौँ स्मृतिपुष्प – अनुस्मृति

स्मृतिपुष्प भनी पैले लेखेथेँ सारमा तब ।
बिस्तार त्यसकै गर्छु यो आठौँ पुष्पमा अब ।।
(८४)

पानीका भेलले गर्दा बालुका कण सत्वर ।
भेटिन्छन् फेरि छुटिन्छन् घुमिरन्छन् सधै भर ।।
(८५)

त्यस्तै नै कालको भेलसँगै बगेर मानिस ।
भेटिन्छ फेरि छुटिन्छ घुमिरहन्छ नित्यशः ।।
(८६)

मर्नु प्रकृति हो बाँच्नु विकार हो सनातन ।
बाँचेको क्षणमै मान्छे बन्न सक्तछ चिद्घन ।।
(८७)

कहीँ कतै थिए जीव भाग्यका भेलमा परी ।
पतिपत्नी भई आए चखेवा युग्मझैँ गरी ।।
(८८)

थियो शैलाद्रिको काख एकान्त गाउँ सुन्दर ।
विवाह भो र चाँडै नै बिते वर्ष बहत्तर ।।
(८९)

अत्यन्त अनजानैमा पुलती खेल झैँ गरी ।
भए प्रणय आबद्ध नबुझ्दैमा कठैबरी
(९०)

न थियो ज्ञान पत्नीमा न ज्ञान पतिमा थियो ।
कालको क्रमले गर्दा दाम्पत्यसूत्र बाँधियो ।।
(९१)
कस्तो बिडम्बना त्यस्तो कस्तो विवशता हरे ।
आफ्ना जीवनका साथी नचिन्दै वरणी गरे ।।
(९२)
विवाहयज्ञमा अग्नि प्रज्वलित गरीकन ।
ती 'इदम् अग्नये' भन्दै थिए स्वाहार्थ ब्राह्मण ।।
(९३)
वरणीअनि वाग्दान क्रमसाथ भए सब ।
खुल्यो भोजन बारीमा भत्तेर नामले तब ।।
(९४)
भत्तेर पछि बिस्तारै यज्ञमण्डपकातिर ।
पिताका साथमा लागेँ भएर अतिसुस्थिर ।।
(९५)
माडो सप्तपदी घुम्दै ध्रुवदर्शनपूर्वक ।
लाजाहुति र सिन्दूर हाल्ने क्रमहरूतक ।।
(९६)
भयो विवाह सम्पूर्ण विधिपूर्वकले सब ।
आयौँ नववधू साथ भित्रिइन् घरमा तब ।।
(९७)
विवाहपछि क्यै वर्ष माइतीमा बसीकन ।
पतिका घरमा आइन् सम्हालिन् घर तत्क्षण ।।
(९८)

खेती पाती सधैँ गर्दै लेक बेँसी गरीकन ।
सकियो इन्दिराजीको कठै सुन्दर यौवन ॥
(९९)
छात्रावस्था हुँदै जन्मिन् जेठी छोरी सुयोगमा ।
जातकर्म हुँदा लक्ष्मी सरिता व्यवहारमा ॥
(१००)
जन्मे सन्तान पाँचोटा पञ्चप्राणसरी भई ।
बेरियौँ यिनले हामी लताले वृक्ष नै सरी ॥
(१०१)
आङ्ग्ल संस्कृत अन्यान्य भाषाहरू पढी सब ।
सेवासर्कारको गर्न पसेँ सर्कारमा तब ॥
(१०२)
लोकसेवा दिई रक्षामन्त्रालय विषे गएँ ।
शाखाधिकृत भै साथी थापा मुकुन्दको भएँ ॥
(१०३)
गएँ घर दशैँ मान्न मातापिता सबै सित ।
शुभाशीष लिएँ टीका जमरा अक्षता सित ॥
(१०४)
तिहार भाइटीकाका टीका माला लिईकन ।
२३ मार्गमा आएँ छोरी पत्नी लिईकन ॥
(१०५)
सरिता पाँचकी छोरी थिइन् अतीव सुन्दर ।
हाम्रा नै साथमा दौडिन् पहाड भीर दुस्तर ॥
(१०६)

आएँ पर्वत शैल खोँच खहरे तर्दै नदी दुर्गम ।
सारै कष्ट सहेर तेह्र दिनमा ठूलो लिई सम्भ्रम ।।
(१०७)
के पाएँ अति नै परिश्रम गरी खाएर यो जागिर ?
वेदान्ती हुँ तथापि झण्झट विषे पर्दैगएँ आखिर ।।
(१०८)
आकाङ्क्षा अनि तिर्सना हलहली बढ्दै गए झन्झन ।
छोरी ती सविता भइन् र क्रमले बढ्दै गयो बन्धन ।।
(१०९)
मेरो जागिर गण्डकी तिर भयो छोरा दुई जन्मिए ।
हर्षोल्लास भयो सबै खुश भए आफन्त जो जो थिए ।।
(११०)
पाइन् कष्ट गरेर पुत्र दुइटा प्रत्यङ्ग फारीकन ।
छातीमा सुत खेल्दथे खुशी भई हेर्दै स्वमाता कन ।।
(१११)
हुन्थिन् दङ्ग भुलेर यो प्रसवको पीडा सबै तत्क्षण ।
बन्थ्यो स्वर्ग समानको समय त्यो ती इन्दिराजीकन ।।
(११२)
लाली थिइन् षोडशी कोमलाङ्गी,
थियो अनौठो सब भावभङ्गी ।
चिन्दै नजान्दै घर छोडि आएँ,
गृहस्थको भार सबै बिसाएँ ।।
(११३)

अनजान थिएँ आफैँ अनजान तिमी थियौ ।
षोडशी सहजै मैमा सर्वस्व सार सुम्पियौ ।।

(११४)

पैलो मिलनको बेला सम्झदा स्वप्न लाग्दछ ।
गयौ तिमी गयो सारा बेसार सब लाग्दछ ।।

(११५)



# नवौँ स्मृतिपुष्प – त्रासदी

तिम्रो पलङ खाली छ सामान छरपष्ट छन् ।
मतर्फ फर्किई सारा खै आमा ? प्रश्न गर्दछन् ।।
(११६)
सुनेर सबको प्रश्न मैले उत्तर के दिनु ?
कहाँबाट तिनी आइन् गइन् कहाँ म के भनूँ ? ।।
(११७)
वेदान्तको म विद्यार्थी पारमार्थिकरूपमा ।
भन्न सक्तिनँ अल्पज्ञ कहाँ गइन् यथार्थमा ।।
(११८)
सोध्छन् सन्तानले आमा कहाँ जानुभयो ? भनी ।
व्यावहारिक आँखाले भन्न सक्तिनँ क्यै पनि ।।
(११९)
थिइन् सन्तानकी माता दूधधारा दिईकन ।
आफ्नै रक्त चुसाएर बनाइन् शिष्ट सज्जन ।।
(१२०)
पारिन् शिक्षित सद्ज्ञानी दुःखकष्टसहीकन ।
उनले सब नै त्यागिन् आफ्ना सन्तानकाकन ।।
(१२१)
नखाइ कहिले बस्थिन् थाहै नदी कसैकन ।
अरूलाई खुवाएर खुशी हुन्थिन् सबै दिन ।।
(१२२)

थिइन् सन्तानकी माता मेरी सर्वस्व नै थिइन् ।
सातौँ दशकदेखि नै मलाई जे थियो दिइन् ॥
(१२३)
बाँच्ने मर्ने सँगै वाचा विवाह यज्ञमा गऱ्यौँ ।
त्यही वचन सम्झेर लामू यात्रा सँगै गऱ्यौँ ॥
(१२४)
साथै बाँच्ने थियो इच्छा आमृत्युतक नै दुई ।
अहिले म छु बाँचेको जराजीर्ण निकै भई ॥
(१२५)
गइन् सन्तानकी माता सासू गइन् बुहारिकी ।
गइन् आमा हजूरामा नाति नातिनी आदिकी ॥
(१२६)
गयो केवल बोलीको साइनो अरूको तर ।
मेरो जीवनको स्वत्व सर्वस्व नै भयो पर ॥
(१२७)
तिमी हुँदा यही कोठा लाग्दथ्यो अमरापुर ।
यही नै अहिले लाग्छ त्रासदीपूर्ण गह्वर ॥
(१२८)
अरूको के लग्यौ के के ? तिम्रा साथ गए कता ।
तिमीले तर मेरो ता लग्यौ बाच्नु यथार्थता ॥
(१२९)
निद्रा भोक लग्यौ मेरो ओजस्, उत्साह जाँगर ।
धर्मकर्म लग्यौ साध्वी ! तीर्थयत्रा भए पर ॥
(१३०)

मातापिता प्रिया पत्नी विनाको शून्य यो घर ।
गृहस्थ बस्न मिल्दैन बन्छ निर्जन गह्वर ॥
(१३१)
घरकी गृहिणी छैनौ म भनौँ कसरी घर ।
मेरो हेर्चाह को गर्छ ? गृहिणी गैसक्यौ पर ॥
(१३२)
थाकेर घरमा पस्ता गर्ला स्वागत को भन ?
भोक तिर्खा बिचारेर कल्ले पस्कन्छ भोजन ?
(१३३)
पर्दा ओछ्यानमा हेर्थ्यौ सुखदुःखहरू सब ।
आमापछि तिमी हेर्थ्यौ ? हेर्देला कसले अब ?
(१३४)
तिम्रा प्रतीक सन्तान हेरेर दिन काट्तछु ।
निद्राविहीन आखाँले यी काला रात काट्तछु ॥
(१३५)



# दशौँ स्मृतिपुष्प – रिक्तता

गर्थ्यौं सदैव सहभोजन एक साथ,
लान्थेँ समातीकन टेबुलमा म हात ।
आलो छ घाउ सब संस्मृतिमा छ टम्म,
छौ जीवितै कि ! सरि लाग्दछ आजसम्म ॥
(१३६)
रङ्गरौस सकियो परिहास, श्रीविहीन हुन गो स्वनिवास ।
दुर्गमी पथिक झैँ छु हतास, शून्य कक्ष छ वस्तछु म वास ॥
(१३७)
वस्त्रभूषणचुरा अझ सम्म, जो थिए सकल छन् सब टम्म ।
सिन्दुरे छ अझसम्म बिहाको, दाइजो छ अझ इन्दु उताको ॥
(१३८)
छन् सबै घरभरी प्रिय छैनौ, व्यर्थ यी सब तिमी जब छैनौ ।
शून्य कक्ष हुनगो अब बस्न, त्रास लाग्छ घरमा अब पस्न ॥
(१३९)
साझा थियो पलङ यो यसमै सुतेर,
देख्थ्यौँ भविष्य सपना कविझैँ बनेर ।
आभा गयौ नयनकी अब के म देखौँ,
छैनौ तिमी सुनिदिने अब के म लेखौँ ?
(१४०)
छोरी गए घर ती छन् परिवार साथ,
सन्तान साथ धनदौलतले सनाथ ।

सन्तान छन् घरभरी सबतर्फ पूर्ण,
आमा बिना सकलछन् तर ती अपूर्ण ॥
(१४१)

द्यौसी टीका विजय उत्सव चाडबाड
त्यो तीजको हँसीखुशी सुखको बहाड ।
पैह्रे र दिव्य कपडा गहना लगाई ।
नाच्थ्यौ छमाछम तिमी तीजगीत गाई ॥
(१४२)

मेरा भए सकल उत्सव ती बिदाइ,
स्वप्नैसमान सब लाग्दछ आज आई ।
प्यारी हुँदा सकल स्वर्ग समान प्यारो,
लाग्थ्यो कठै तिमी बिना जगतै अँध्यारो ॥
(१४३)

भन्थेँ नयाँ पौरुष इन्दुलाई,
कैले कहीँ बाहिरबाट आई ।
रमाउँथिन् दङ्ग परी सहर्ष,
म बन्न जान्थेँ बहुतै प्रहर्ष ॥
(१४४)

गयो हरायो पुरुषार्थ खास,
इन्दु गइन् छु बहुतै उदास ।
बोलाउँ कल्लाई लिई म नाउँ ?
मेरा गुनासा कसमा सुनाऊँ ?
(१४५)

ती तीर्थयात्रा अनि चारधाम,
त्यो अष्ट्रेलियाको भ्रमणाभिराम ।
नाँच्तै छ आँखाभरि आजसम्म,
इन्दु हरायौ बीचमै अचम्म ।।
(१४६)

को सुन्छ ? मेरा मनका गुनासा,
को बुझ्छ भित्री मनका हतासा ।
कल्ले दिने साहस बाँच्नलाई,
डोऱ्याउने हात दुवै समाई ।।
(१४७)

पसारिँदामा कसले मलाई,
उठाउला हात दुवै समाई ।
खुवाउला ओखति को मलाई,
कठैबरा भन्दछ को मलाई ?
(१४८)

खुवाउला अन्तिम ओखती को ?
सुनाउला तारकमन्त्र नै को ?
गर्ला र कल्ले दशदान धर्म ?
वा व्यर्थ ठान्लान् दशगात्र कर्म ।।
(१४९)

ब्रह्मज्ञ इन्दु तिमी ब्रह्मज्ञानी,
बाँच्तै जीवन्मुक्त थियौ पुरानी ।
गऱ्यौँ तथापि सब कृत्यकर्म,
योबाट बढ्ला शुभ वेदधर्म ।।
(१५०)



# एघारौँ स्मृतिपुष्प – विरक्ति

वेदान्त भागवत वेद पुराण आदि,
चल्थे दशौँ दशक सत् शुभशास्त्र आदि ।
सम्पूर्णमा मसँग नै सहभागी हुन्थ्यौ,
बुझ्थ्यौ तिमी सकल ती कृतकृत्य बन्थ्यौ ॥
(१५१)

अभ्यासी साथी रघु विश्व र शारदादि,
छैनन् गए सकल दूर भए अनादि ।
यौटी थियौ मसँग शास्त्र सुनेर बस्थ्यौ,
छाया समान तिमी नित्यशः साथ हुन्थ्यौ ॥
(१५२)

ऐले गयौ तिमी पनि तमदेखि पार,
ब्रह्मै थियौ र अनि मुक्त भयौ अपार ।
एक्लो छु जीर्णतरुझैँ कससाथ बोलूँ,
अन्तस्थ दुःख मनको कससाथ खोलूँ ॥
(१५३)

को रुन्छ ? साथ म रुँदा अनि हाँस्छ को र ?
रुन्चे कुना हृदयको अब बुझ्छ को र ?
यो वेदना हृदयको कुन शान्त गर्ला ?
तापार्त अर्ध मृत यो तनको सँहार्ला ? ॥
(१५४)

सन्तान छन् स्वजन छन् घर सम्पदा छन्,
आकाशमा रविशशी ग्रहतारका छन् ।

घुम्छन् ऋतु दिन र रात समग्र पूर्ण,
छैनौ तिमी मकन इन्दु सबै अपूर्ण ॥
(१५५)
के हुन्छ ? धेर धन शक्ति र सम्पदाले ?
के हुन्छ ? शौर्य बल पौरुष मान्यताले ?
सत्ता अथाह र अहं भई हुन्छ के र ?
बेकार हो सकल जान्छ धूलो बनेर ॥
(१५६)
आधा गयौ पर भयो सब मोह माया,
धानौँ हरे ! म कसरी अब जीर्ण काया ।
ज्योत्स्ना बिना कसरि चन्द्र हुने प्रपूर्ण ?
त्यस्तै म इन्दु विनु आज भएँ अपूर्ण ॥
(१५७)
आँखाभरी मनभरी तनमा तिमी छौ
मेरा किताब सब ग्रन्थभरी तिमी छौ ।
अष्ट्रेलिया सगुन दैनिकिमा तिमी छौ,
सम्पूर्ण रक्तकण धड्कनमा तिमी छौ ॥
(१५८)
काशी गयौँ सकल तीर्थभरी तिमी छौ,
तिम्रा स्वरक्त सरिता सविताभरी छौ ।
सञ्जीवमा सगुनमा सतीशैभरी छौ,
छैनौ कहाँ ? सकल वंशभरी तिमी छौ ॥
(१५९)

गाहर्स्थसिर्जन समग्रभरी तिमी छौ,
जाग्रत् सुषुप्ति सपनी सबमा तिमी छौ ।
संचेतना अध अचेतन चेतमा छौ,
सौगन्ध्यझैँ सुमनकी मनमा तिमी छौ ।।
(१६०)

चौरासिपूजनभरी व्रतमा तिमी छौ,
श्राद्धादि कर्म जप धर्मभरी तिमी छौ ।
यो श्वास रक्तकण हृत्चितिमा तिमी छौ,
सम्पूर्ण यो विधुरका स्मृतिमा तिमी छौ ।।
(१६१)

छौ के भनौँ सकल शून्य र रिक्तता छ,
हेरौँ जता विरहजन्य विरक्तता छ ।
लाग्दैन बोल्न मन क्वैसित इन्दु आज,
मेरा निमित्त जड भो सब यो समाज ।।
(१६२)

संसार हो सब वृथा सपना समान,
अज्ञानजन्य तमसावृत तुच्छ भान ।
यो इन्द्रजालसरि मायिक शून्य सार,
यो तुच्छ सृष्टि तमको भ्रम हो विकार ।।
(१६३)

निद्रा तिमीसँग गयो सुख चैन भाग्यो,
विक्षिप्त भो हृदय दैन्य विशाद जाग्यो ।
क्यै शास साथ जब शेष छ जीर्ण लाश,
आत्मै गयो जिउनुको अब छैन आश ।।
(१६४)

भो सद्यमुक्ति अथवा कि ! त अर्चिरादि,
बाटो लियौ कि श्रुतिवर्णित जो अनादि ।
जेबाट होस् विमल ब्रह्म भयौ अनन्त,
तिम्रो भयो सकल जन्मनु मर्नु अन्त !
(१६६)
सुन्थ्यौ पुराण घरमा सँगसाथ हुन्थ्यौ,
भै भक्ति आप्लुत तिमी मनबाट रुन्थ्यौ ।
दानादि कर्म सबमा अति नै उदार,
तिम्रो थियो सकल दान दिने विचार ।।
(१६६)
इच्छा गर्‍यौ जति कुरा भरिसक्य मैले,
पूरा गरेँ जतिसकेँ सब ती क्रमैले ।
भूम्यादि दान अनि पूजन विष्णुलक्ष्मी,
सोपस्करादियुत अर्पण भो स्वलक्ष्मी ।।
(१६७)
हे धर्मकी स्वजनकी प्रतिमूर्ति पत्नि !
छोडी गयौ विधुर पङ्गु भएँ अपत्नी ।
तिम्रै लिएर अधिकार म धर्म गर्थें,
अर्धाङ्गिनीसँग बसी सब कर्म गर्थें ।।
(१६८)
मेरा गए सकल धार्मिक कृत्य कार्य,
तीर्थाटनादि शुभ देव र पैत्र्यकार्य ।
यज्ञादि कर्म सवनादिक धर्म भागे,
हे धर्मपत्नि ! सब ती तिमिसाथ लागे ।।
(१६९)

मेरी थियौ मन तिमी मनकी जुहार,
मौनव्रती वचनमा मृदुता अपार ।
जाँदा तिमी मन तिमीसँग नै गएछ,
यद्वा हताश मन चूर्ण सबै भएछ ॥
(१७०)

बज्दैन यो मन सितार टुटेछ तार,
वीणा छ मौन अब झङ्कृतिशून्य सार ।
जोबाट तार मनको कसिएर बोल्थ्यो,
सङ्गीत सप्तसुरको मृदुभाव घोल्थ्यो ॥
(१७१)

साथै लग्यौ मन हरेर सुटुक्क इन्दु !
छोडी गयौ नयनमा प्रिय अश्रुबिन्दु ।
थापेर राख्तछु म यी उपहार ठानी,
बाँच्ने छ संस्मृति लिई कृश जिन्दगानी ॥
(१७२)

संझन्छ आज मन लक्ष्मणरामवार्ता,
त्यल्ले अझै व्यथित यो मन हुन्छ बढ्ता ।
सक्ला सँहाल्न कसले मन यो सुनेर,
वर्षन्छ नेत्र बिचरो विरही बनेर ॥
(१७३)

"जीवत्सु तातपादेषु नूतने दारसङ्ग्रहे,
मातृभिर्लाल्यमानानां ते हि नो दिवसा गताः ।"
पिता पनि हुनुहुन्थ्यो दुलही ती नयाँ थिए,
आमाको लालना मिल्थ्यो कठै ती दिन गैगए ॥
(१७४)

जाँदा बजार गहना कपडा म देख्छु,
शृङ्गारसाधन सहस्र सुरम्य देख्छु ।
पोते चुरा सिदुँरले मन चस्स छुन्छ,
निस्सार यो प्रियविना सब तुच्छ हुन्छ ॥
(१७५)

गर्छन् सतीश इनु नित्य सुसार सेवा,
तिम्रो गरे सरह नै दिनरात सेवा ।
यीबाट सेवित भयौँ ऋण जो उतारे,
आशिष् दिऊँ युगलमा कृतकृत्य पारे ॥
(१७६)

सञ्जीव साथ सुषमा परबाट आई,
सेवा गरे युगले मनचित्तलाई ।
छोरी दुई सगुनले सब अश्रुसाथ,
सारा क्रियादिक गरे अति भक्तिसाथ ॥
(१७७)

भै मौन यो भवन नै अति शून्य पारी,
हेरी म तर्फ अनि तप्तप अश्रु झारी ।
लाग्यौ तिमी कुन दिशा नलिई बिदाइ,
के भूल भो भनन भामिनि ! सो मलाई ॥
(१७८)

मौनव्रती सबसँगै कम वाक्य बोल्थ्यौ,
हे मानिनी ! वचनमा मृदुभाव घोल्थ्यौ ।
खै अन्तमा मसँग वाक्य कुनै न बोली,
टाढा गयौ प्रियतमे ! कुन भूल भो कि ? ॥
(१७९)

सन्तान पाँच सँगको परिवार हाम्रो,
ठान्थेँ म यो झुपडि हो परिपूर्ण राम्रो ।
जस्तै चरी युगल भै गुँड रच्छ सानो,
त्यस्तै रच्यौँ सकसले घर नाम मानो ।।
(१८०)
हुर्के जसै स्वबचरा गुँडबाट टाढा,
उड्छन् त्यसै गरि उडे स्वअपत्य सारा ।
यौटी थियौ सँग तिमी जिउने सहारा,
छोडी गयौ निठुर भै म छु बेसहारा ।।
(१८१)
रोऔँ विलाप म गरौँ तर फर्किइन्नौ,
हे निष्ठुरी ! सपनिमा पनि देखिँइन्नौ ।
कर्मानुसार सब जानु छ जान्दछु म,
मान्दैन यो मन तथापि कसो गरौँ म ?
(१८२)
प्रारब्धले मिलन भो शुभ पुण्यले हो,
संयोगमात्र अथवा प्रभुको कृपा हो ।
स्वप्नै थियो क्षणिक वा प्रतिभास सार,
स्वप्नै भए पनि तिमी मिल एक बार ।।
(१८३)
हो मृत्यु प्राकृत अप्राकृत बाँच्नु भन्ने,
ठान्छन् ठुला बुधहरू श्रुतिसार जान्ने ।
त्यो हो भने प्रकृतिपूर्ण भइ अपार,
बस्छ्यौ भई प्रकृति सत् चिति निर्विकार ।।
(१८४)

वेदान्तवेद्य चिति हो सब भित्र मिल्छ,
जानिन्न वाक् र मनले चितिबाट चल्छ ।
यद्वा तिमी चिति भएर उदाउँदैछ्यौ,
मेरो समस्त जड देह चलाउँदैछ्यौ ॥
(१८५)

स्वार्थी छ मानिस सधैँभरि आफ्नु लागि,
माया गरेसरि ऊ गर्दछ बाँच्न लागि ।
तिम्रो अभाव हुन आज सकेन सह्य,
आघात तीव्र मनभित्र परी असह्य ॥
(१८६)

सम्झेर इन्दुमति ती भृगुभीरबाट,
सोझै गरेर सकिए अज आत्मघात ।
सम्झेर इन्दु म त गर्दिन आत्मघात,
जस्तो परोस् हृदयमा दृढवज्रपात ॥
(१८७)

हो आत्मघात अति शास्त्रनिषिद्ध कर्म,
यो अज्ञबाट गरिने अति गर्ह्य कर्म ।
गर्दैन बुद्धजनले कहिल्यै कुकर्म,
यल्ले बिगार्छ परलोक अमूत्र सम्म ॥
(१८८)

थाहा छ इन्दु ! सब सम्झ तिमी हुँदा म,
कैल्यै सचेतन भएन निषिद्ध काम ।
ऐले म गर्छु कसरी म हुँ वेदमार्गी,
गर्नेछु कर्म जति सक्तछु भै सुमार्गी ॥
(१८९)

वेदान्तको पथिकभैकन आजसम्म,
लेखेँ र लेख्तछु अभै न लिई अचम्म ।
वेदान्तको श्रवण औ मननादि सारा,
गर्थ्यौं सँगै तरण निम्ति कि ! भो सहारा ॥
(१९०)
क्यै वर्ष साथ जिउने मनको सदिच्छा,
पुग्दैपुगेन भगवन् ! किन हो ममेच्छा ?
प्रारब्धले अधमरो सरिको बनाई,
अर्धाङ्गिनी लगिदियो सहसा उठाई ॥
(१९१)
कोही हुँदैन सँगमा पछि जानुपर्दा,
क्यै हुन्न साथ तन सम्पति लानुपर्दा ।
जाँदैन केही सँग जानुछ मात्र सके,
हो ब्रह्मज्ञान भगवतारक नाउ एक ॥
(१९२)
प्रारब्धका वश परी जति नै रहौँला,
तिम्रा निमित्त शुभकर्म गरिरहौँला ।
क्यै छैन निश्चय कुनै दिन हिड्नसक्छु,
तिम्रै भई पथिक हे प्रिय ! मिल्न सक्छु ॥
(१९३)
छान्दोग्यमा जति सुन्यौ उपदेशजन्य,
भूमा महावचन तत्त्वमसीति अन्य ।
त्यस्तै बृहद् श्रवणमा गुरु याज्ञबाट,
सुन्यौ महावचन वैदिक मुक्तिजन्य ॥
(१९४)

शारीर सूत्र बृ.उ.आदिक शास्त्रमा म,
लेखेर सार कवितादि सुनाउँथे म ।
ती माथि फेरि रचनादिक कारिकादि,
लेखी प्रकाशन गरेँ नबनी प्रमादि ॥
(१९५)

लेखेँ पछाडि जति भन्न नपाउँदैमा,
सारै असक्त शवतुल्य भईदिँदामा ।
हिँड्यौ तिमी सकल बन्धन पूर्ण फारी,
भै ब्रह्म हे प्रिय ! गयौ तमदेखि पारि ॥
(१९६)

लेखेर सुन्छ कसले ? अनि बुझ्छ कल्ले ?
लेख्तैछु तै पनि सुमुक्ति दिने हुनाले ।
छैनौ तिमी अब म लेख्तिन शास्त्र धेर,
कस्का निमित्त रचना म गरौँ ? गएर ॥
(१९७)

ब्राह्मी तिमी मलिमसा तमदेखि पार,
ब्राह्मी परा वितत हौ सबमा अपार ।
त्यै शक्ति भित्र छ ममा त्यसले मलाई,
ऊर्जा दिँदैछ अझ सिर्जन गर्नलाई ॥
(१९८)

शास्त्रादि जे अघि सुन्यौ सुमुखे ! मबाट,
सारांश फेरि सुन हे ! प्रिय दूरबाट ।
जहाँ रहू सहचरी म सुनाउनेँ छु,
यैबाट जीवित भएर रमाउनेँ छु ॥
(१९९)



# बाह्रौँ स्मृतिपुष्प – ब्रह्मविद्या

ईशाख्य जो उपनिषद् पहिलो सुनाएँ,
लेखेर सार कविता क्रमले बुझाएँ ।
त्यो कारिकामय थियो यजुअंश शुद्ध,
हो ज्ञानकर्ममय शास्त्र अति विशुद्ध ॥
(२००)

यो केन हो उपनिषद्युत सामवेद,
आत्मैक्यतत्त्व यस भित्र छ जो सुवेद ।
"यस्यामतम्' सदृश मन्त्रहरू अनेक,
यीबाट बोध हुन सक्त छ ब्रह्म एक ॥
(२०१)

तेस्रो बुझे उपनिषद् कठ कृष्णको हो,
सर्वोच्च बोधयुतले परिपूर्ण यो हो ।
संवाद आउँछ यहाँ यमनाचिकेता,
सङ्घर्ष मृत्युसँग जीवनका प्रदाता ॥
(२०२)

चौथो भयो उपनिषद् जुन प्रश्ननाम,
छन् प्रश्न धेर गुरुकासँग बोधकाम ।
यो वेद अंश जुन गम्य अथर्ववेद,
त्यो आत्मतत्त्व सजिलै छ हुने सुवेद ॥
(२०३)

पाँचौ छ मुण्डक परात्म अथर्वजन्य,
विद्या परा र अपरा यसमा अनन्य ।

सोपान हो उपनिषद् अति सूक्ष्म रम्य,
'दिव्यो ह्य' मन्त्रसरि मन्त्रहरू सुगम्य ॥
(२०४)

माण्डूक्य हो उपनिषद्युत बार मन्त्र,
यो हो अथर्व शिर ॐ मय मोक्ष तन्त्र ।
यस्को महावचन हो "अयमात्मा ब्रह्म",
यो कारिका युत छ चिन्मय शब्दब्रह्म ॥
(२०५)

सातौँ छ कृष्णयजुको शिर तैत्तिरीय,
ब्रह्मस्वरूप र तटस्थ अवर्णनीय ।
यस्को अरू उपनिषद् सरहै महत्त्व ,
ज्ञातव्य यो उपनिषद् हुन ब्रह्मतत्त्व ॥
(२०६)

ऋग्वेदको उपनिषद् शिर ऐतरेय,
यो हो महावचनले युत दर्शनीय ।
"प्रज्ञानं ब्रह्म" जसबाट अथर्ववेदी,
जान्छन् भएर शुभमुक्त तमान्ध खेदी ॥
(२०७)

अर्को नवौँ उपनिषद् यजुकृष्णको हो
ज्ञानार्थ मन्त्र यसको परिपूर्णता हो ।
'एको वशी' सकल सञ्चिति छन् अनेक
यो हो सदा श्रवण चिन्तन भित्र एक ॥
(२०८)

ब्रह्मसूत्र सँगै मैले सबै उपनिषद् लिई ।
लेखेँ गहन सारांश कारिका टिप्पणी दिई ॥
(२०९)
छान्दोग्योपनिषद्भित्र धेरै छन् ज्ञान तत्त्वतः ।
तत्त्वमसि महावाक्य आरुणी उपदेशित ॥
(२१०)
जाबाल सत्यकामादि ब्रह्मिष्ठहरूको कथा ।
अर्चिरादिकका साथै उत्तरी दक्षिणी पथ ॥
(२११)
सनत्–नारद संवाद भूमाविद्या छ वर्णित
सामवेदीहरू निम्ति पठनीय छ तत्त्वतः ॥
(२१२)
छान्दोग्याभित्र धेरै छन् उपदेश अनेकन ।
गुरुबाट सुनेमात्रै बन्छ यो मुक्तिसाधन ॥
(२१३)
लेखेको छु सविस्तार कारिका सारमा पनि ।
मुक्तिकामीहरूलाई पार तार्ने छ नै भनी ॥
(२१४)
बृहत् छ बृहदारण्य शुक्लवेदीहरूकन ।
यसको नै महावाक्य बन्ने हो मुक्तिसाधन ॥
(२१५)
अजात–गार्ग्य–संवाद मूर्तामूर्तविवेचन ।
मैत्रेयी–याज्ञ–संवाद द्रष्टव्यादि लिईकन ॥
(२१६)

मधुब्राह्मणका पश्चात् याज्ञवल्कीय काण्ड छ ।
'अभयं वै' भनी यस्मा महावचन आउँछ ।

(२१७)

'अहं ब्रह्मास्मि' यस्मा नै अनुभूत्यात्म वाक्यको ।
शुरुमा नै छ उल्लेख यै वाक्य हो महत्त्वको ॥

(२१८)

गुरुका मुखबाटै यो विधिपूर्वकले सुने ।
अनुभव भएमा नै जिज्ञासु ब्रह्म नै हुने ॥

(२१९)

शास्त्रार्थ धेर छन् यस्मा उपदेशहरू पनि ।
आद्योपान्त सुनेकी छौ मुमुक्षु बहुतै बनी ॥

(२२०)

संवाद गर्न मिल्दैन तिमी दूर गई सक्यौ ।
इन्द्रियातीत भै साध्वी तिमी ब्रह्म भई सक्यौ ॥

(२२१)

तिमी ब्रह्मसरी नै छौ सबैतर्फ टनाटन ।
नभै कान तिमी सुन्छ्यौ बुझ्छ्यौ सारा नभै मन ॥

(२२२)

'अप्राणो ह्यमना शुभ्रः' श्रुतिले पनि भन्दछ ।
विना इन्द्रिय यो मेरो सन्देश सुन्न मिल्दछ ॥

(२२३)

श्रुतिसन्देश यो मेरो सारांशमा गईकन ।
मनको वेदना पोखेँ केही शान्त भयो मन ॥

(२२४)

बाँच्तैमा सब वेदान्त तिमीले जो सुनी गयौ ।
त्यसै कारण हे इन्दो ! शुद्ध ब्रह्म तिमी भयौ ॥
(२२५)
ब्रह्मभूत तिमीलाई कुनै शास्त्रहरू पनि ।
सुन्ने आवश्यकै छैन बस ब्रह्म स्वयं बनी ॥
(२२६)



# तेह्रौँ स्मृतिपुष्प – जीवनचक्र

कति बेकार संसार कति स्वार्थी र निर्दय ।
आफन्तकै गरी नाश बन्न खोज्दछ निर्भय ॥
(२२७)

पति बाँच्तछ पत्नीको गरी शोषण सर्वदा ।
मित्रको भावले हेर्छ पत्नीलाई यदाकदा ॥
(२२८)

सन्तानोत्पत्तिका लागि मनोरञ्जन निम्ति वा !
जड संयन्त्र झैँ ठान्छ नारीलाई कतै कि वा !
(२२९)

नारी हुन् जननी धातृ माता बहिनी भामिनी ।
दुर्गा चण्डी महाकाली महालक्ष्मी र मानिनी ॥
(२३०)

महासरस्वती अम्बा बुद्धिदातृ यशस्विनी ।
सर्वरूपा भनी जान्नू नारीलाई मनस्विनी ॥
(२३१)

यिनैबाट लिई जन्म यिनैलाई सताउनु ।
योभन्दा तुच्छ को हुन्छ ? थाहा केही नपाउनु ॥
(२३२)

सष्टृ हुन् विश्वकी नारी माया प्रकृति जीवनी ।
यी विना गर्न सक्तैन सिर्जना ब्रह्मले पनि ॥
(२३३)

जगद्धातृ जगन्माता महत्ता नबुझीकन ।
अन्यथा दृष्टिले हेर्छन् अज्ञानी जन दुर्जन ।।
(२३४)
नारी हुन् शक्ति यीबाटै प्राणीको चल्छ जीवन ।
शिव शक्ति विना हुन्छन् शवतुल्य अकिञ्चन ।।
(२३५)
माता पिता दुवैबाट सप्तधातु लिईकन ।
तयार हुन्छ प्राणीको सप्तधातुमयी तन ।।
(२३६)
राता धातु सिधै मिल्छन् माताबाट समस्तमा ।
सेता धातु भने मिन्छन् पिताबाट समग्रमा ।।
(२३७)
वेदानुसारले अस्थि मज्जा वीर्य गरीकन ।
देही लिन्छ पिताबाट देह गर्न प्रवर्धन ।।
(२३८)
छाला रगतका साथै मांसधातु मिलीकन ।
यी सबैबाट बिस्तारै प्राणीको बन्छ नै तन ।।
(२३९)
सातौँ धातु भने रौँ हो देहले गर्छ सिर्जन ।
यो हो वैदिक सिद्धान्त यो हो शाश्वत चिन्तन ।।
(२४०)
आयुर्वेद भने पित्त छैटौँ हो धातु भन्दछ ।
छालाका ठाउँमा पित्त धातु भनेर गन्दछ ।।
(२४१)

जेहोस् धातु मिली सारा प्राणीको देह बन्दछ ।
नारी पुरुष संयोग पश्चात् नै भ्रूण बन्दछ ॥
(२४२)
आमाका गर्भमा भ्रूण आमाबाट लिई रस ।
दिन पूर्ण गरी जन्तु देखा पर्दछ वेवश ॥
(२४३)
भोगी पञ्चाग्निको ताप प्रारब्धवश भैकन ।
योनि आयु र दुःखादि भोग्छ जीव सबै दिन ॥
(२४४)
आज विज्ञान गर्दैन चर्चा पञ्चाग्निको कतै ।
प्राणी जन्मन्छ वा मर्छ चर्चा गर्छ जताततै ॥
(२४५)
आएर जीव जन्मन्छ कहाँबाट यहाँ झरी ।
अनि जीव कहाँ जान्छ ? भोग भोगेर जो मरी ॥
(२४६)
ठानी कुरा यही नै हो भोग जन्म र मृत्यु नै ।
यसकै निम्ति संसार बनेको हो अवश्य नै ॥
(२४७)
विज्ञान जब जान्दैन यो कुरा, मात्र बाहिरी ।
चेतनाहीन संसृष्टि गर्छ वर्णन आखिरी ॥
(२४८)
जित्यो र कसले मृत्यु जति यत्न गरे पनि ।
प्राणीले मर्नु नै पर्छ ध्यानी ज्ञानी भए पनि ॥
(२४९)

यो जहाँसम्म जान्दैन विज्ञान शून्य बन्दछ ।
(तमेव विदित्वाऽतिमृत्युमेति नान्यःपन्था विद्यतेऽयनाय)
यही हो वेदको मन्त्र वेदले मात्र जान्छ ॥
(२५०)
मृत्यु नै नजितेसम्म मान्छेले जित्छ के अरू ?
अरू जितेर के हुन्छ त्यो जीत भ्रम हो बरू ॥
(२५१)
जान्दैन सत्य विज्ञान सच्चिद्‌ब्रह्म सनातन ।
लेखेको छु महावाक्य ग्रन्थमा स्पष्ट नै जुन ॥
(२५२)
मरेर जन्मनै पर्छ मरेर फेरि जन्मन ।
दुश्चक्र छुट्न सक्तैन ब्रह्मज्ञान नभैकन ॥
(२५३)
ब्रह्मज्ञान हुनेभन्दा पहिले म समुच्चयी ।
बारे सङ्क्षिप्त लेख्नेछु मुक्त हुन् वा अमुक्त यी ॥
(२५४)
यस्को विस्तृत उल्लेख महावाक्याख्य ग्रन्थमा ।
मैले गरिसकेको छु यहाँ लेख्तछु सारमा ॥
(२५५)
अर्चिरादि हुँदै जाने ब्रह्माजीका उपासक ।
ब्रह्माको लोकमा बस्छन् अनन्त वर्षका तक ॥
(२५६)
भोग भोगेर फर्कन्नन् भन्ने छ बृ.उ.को मत । (६।२।१५)
मानवमण्डलै भित्र फर्कन्नन् छा.उ.को मत ॥ (४।१।५)
(२५७)

ब्रह्मज्ञान नभै मुक्ति हुँदैन श्रुति भन्दछ ।
मानवी सिर्जनाभित्र फर्कन्नन् छा.उ. भन्दछ ॥
(२५८)
यसरी श्रुतिले भन्छ ब्रह्मज्ञान नभैकन ।
जाने समुच्चयी मुक्त हुँदैनन् पर्छ फर्कन ॥
(२५९)
पृथ्वीमा जब फर्कन्नन् कल्पना अन्यको गर। (छा.उ.५।१०।५)
शा.भा.मा स्पष्ट नै भन्छन् आचार्य गुरु शङ्कर ॥
(२६०)
ब्रह्माका लोकमा भोग भोगेका ती समुच्चयी ।
मुक्त हुन्नन् र फर्कन्नन् के हुन्छ तिनको स्थिति ?
(२६१)
यो जान्न लागि शा.भा. त्यो बृ.उ. को पढ्नुपर्दछ। (३।२।१३)
अझै बुझ्न महावाक्य ग्रन्थ नै पढ्नु पर्दछ ॥ (१७।२७)
(२६२)
जिज्ञासा यसमा हुन्छ केबाट मुक्त हो हुने ?
सारांशमा म लेख्नेछु केबाट मुक्त नै हुने ॥
(२६३)
चारसाधनले युक्त मुमुक्षु द्विजले गई ।
जिज्ञासा ब्रह्मको गर्नु ब्रह्मज्ञ गुरुमा गई ॥
(२६४)
ब्रह्मज्ञ गुरुबाटै नै शिष्यले विधिका सित ।
आफ्नू नै वेदको वाक्य सुन्नु पर्छ सफा सित ॥
(२६५)

साक्षात् नै मुक्तिको हेतु महावचन हो भनी ।
शास्त्रादि स्पष्ट नै भन्छन् अरूको सुन्नु हुन्न नि ॥
(२६६)

मुक्तिका लागि वेदैका महावचन छन् कति ?
कसको कसले सुन्ने न सुन्ने वाक्य छन् कति ?
(२६७)

महावचन साक्षात् नै मुक्तिको हेतु हो तर ।
कसरी हेतु हो ब्रह्मन् ! बुझ्न भो अति दुष्कर ॥
(२६८)

जिज्ञासा अति राम्रो हो वेदवाक्य थरीथरी ।
तिनमा तीन छन् मुख्य अखण्ड बोधले गरी ॥
(२६९)

अण्डबोध हो पैलो दोस्रो वाक्य अवान्तर ।
उत्प्रेरक भनी तेस्रो सहाय वाक्य हो तर ॥
(२७०)

अखण्डबोधको वाक्य साक्षात् हो मुक्तिसाधन ।
त्यही श्रवण गर्ने हो गुरुबाट दिई मन ॥
(२७१)

तिनमा चाहिँ हुन् चार श्रवणार्थक मुख्यतः ।
हो 'तत्त्वमसि' छान्दोग्य श्रुतिसँग समन्वित ॥
(२७२)

'अभयं वै जनक प्राप्तोऽसि' यजुःसमाद्रित ।
'प्रज्ञानं ब्रह्म' हो वाक्य ऐतरेय समन्वित ॥
(२७३)

अयमात्मा वेदवाक्य माण्डूक्य श्रुतिभित्र छ ।
यिनैलाई महावाक्य स्पष्ट नै श्रुति भन्दछ ।।
(२७४)
तत्  त्वम्  असि महावाक्य श्रवणार्थक हो जुन ।
सत्  हो आत्मा गुरुद्वारा शिष्यलाई बुझाउन ।।
(२७५)
अन्तमा श्रुतिले भन्छ सदात्मा श्वेतले बुझे ।
अहं ब्रह्मास्मि भन्दैनन्  बोल्दैनन्  शिष्य के बुझे ?
(२७६)
यस्को श्रवणले हुन्न ऐक्य आत्मा र जीवको ।
सदात्मा जान्नका लागि महत्व उपदेशको ।।
(२७७)
प्रज्ञानं ब्रह्म यो वाक्य श्रवणात्मक हो कि ? वा ।
श्रुतिले स्पष्ट भन्दैन श्राव्य हो अनुभाव्य वा ?
(२७८)
अयमात्मा ब्रह्म त्यस्तै जानिन्न कुन वाक्य हो ।
श्रवणात्मक हो यद्‍वा अनुभाव्य कि ! वाक्य हो ।।
(२७९)
यजुःको मात्र देखिन्छ महावचन तत्त्वतः ।
साक्षात्  नै मुक्तिको हेतु वन्नसक्तछ शास्त्रतः ।।
(२८०)
यसमा तर्कले हुन्न अरू प्रमाणले पनि ।
सक्तैनन्  मुक्तिको हेतु बताउन कुनै पनि ।।
(२८१)

गुरुपरम्परा भनी हुन्न महावाक्य प्रमाणित ।
अखण्डार्थ जहाँ त्यै हो महावचन वेदतः ।।

(२८२)

उदाहरण केही म दिन्छु सारांशमा यहाँ ।
गुरुका साथ संवाद शिष्यको हुनगो जहाँ ।।

(२८३)

उपनिषत्कारिका भित्र महावाक्य विषे पनि ।
लेखेको छु त्यसैबाट बुझौँ हो वाक्य के ? भनी ।।

(२८४)

शिष्य –

महावचन नै साक्षात् मुक्तिको हेतु तत्त्वतः ।
हो भने सुन्न चाहन्छु महावाक्य म सारतः ।।

(२८५)

गुरु –

महावचन हो पैलो सोम्य ! श्रवणरूप नै ।
मननादिक अभ्यास तत्पश्चात् गर्नुपर्छ नै ।।

(२८६)

'तत् त्वम् असि' महावाक्य नौ नौ पल्ट सुनेपछि ।
'तत् ह अस्य विजज्ञौ' यो श्वेतमा ज्ञान भो पछि ।।

(२८७)

त्यस्तै नै ब्रह्मविद्द्वारा 'अभयं वै' सुने जब ।
ब्रह्माभ्यास गरे लामु राजा जनकले तब ।।

(२८८)

ब्रह्मविद्सँग शास्त्रार्थ निदिध्यासन जो भयो ।
'अहं ब्रह्मास्मि'को बोध त्यो कालान्तरमा भयो ॥
(२८९)

लेखेको छु महावाक्य ग्रन्थ त्योबाट नै पनि ।
यहाँ उद्धृत गर्दैछु जिज्ञासुले बुझुन् भनी ॥
(२९०)

आचार्य अनि जिज्ञासु बीच संवादरूपमा ।
लेखेको छु महावाक्य दिन्छु सारांशरूपमा ॥
(२९१)

जिज्ञासु –

छन् चार वेदमा ब्रह्मन् ! महावाक्य अनेकन ।
श्रवणीय महावाक्य अनुभूय गुरो ! कुन ?
(२९२)

स्पष्ट पारेर हे ब्रह्मन् ! सुन्न पाउँ म तत्त्वतः ।
यो विना मुक्ति मिल्दैन यै हो साधन अन्ततः ॥
(२९३)

आचार्य –

मुमुक्षुले महावाक्य मोक्षार्थ सुन्नुपर्दछ ।
महावाक्य स्वशाखाको वेदकै हुनुपर्दछ ॥
(२९४)

स्वशाखाकै महावाक्य ब्रह्मज्ञ गुरुकासित ।
विधिपूर्वकले सुन्नु यही हो शास्त्रको मत ॥
(२९५)

'स्वाध्याय[1] धर्म' इत्यादि सर्वज्ञमुनिको मत ।
सोही हो मुक्तिसोपान वेदशास्त्रादिसम्मत ।।

(२९६)

[2]अरूका वेदको वाक्य हुँदैन सुन्नु निश्चय ।
यही हो स्मृतिको वाक्य दिँदैछु तल निर्भय ।।

(२९७)

नपढीकन वेदान्त नबुझेर समग्रता ।
'तत्त्वम् असि' सबैले नै सुन्ने हो भन्नु अज्ञता ।।

(२९८)

यो बुझीकन वक्ताले लिई तात्पर्य शास्त्रको ।
उपदेश गरेमात्रै भलो होला मुमुक्षुको ।।

(२९९)

सबै नै वेदका वाक्य महावचन होइनन् ।
जीवात्मा परमात्माका ऐक्यबोधक होइनन् ।।

(३००)

विद्वान् गुरु महात्मा वा ब्रह्मज्ञ सन्त पण्डित ।
तात्पर्य नबुझी बोल्ने आफैँमा सब खण्डित ।।

(३०१)

---

१. स्वाध्यायधर्मपठितं निजवेदशाखावेदान्तभूमिगतमादरपालितञ्च ।
सन्न्यासिना परदृशा गुरुणोपदिष्टं, साक्षान्महावचनमेव विमुक्तिहेतुः ।।
– सङ्क्षेपशारीरकम् ३।२९५

२. हित्वा स्वस्य द्विजो वेदं यस्त्वधीते परस्य तु ।
शाखारण्डः स विज्ञेयः सर्वधर्मबहिष्कृतः ।। – लघ्वाश्वलायनस्मृतिः २४।१९

[३]शङ्कराचार्यको वाक्यवृत्तिले भन्छ शब्दतः।
आत्मा र परमात्माको यही हो ऐक्य तत्त्वतः ॥
(३०२)
यही समान देखिन्छ [४]श्रीसुरेश्वरको मत ।
यो जान्नु पनि राम्रो हो वाक्यज्ञानार्थ वस्तुतः ॥
(३०३)
दुई आचार्यको आयो तत्त्वमस्यादि शंसन ।
यसै सन्दर्भमा हुन्छ महावचन वर्णन ॥
(३०४)
त्यो तत्त्वमसिका पश्चात् आएको आदि हो जुन ।
त्यसबाट महावाक्य अरू छन् हुन्छ सूचन ॥
(३०५)
'तत् त्वम् असि' महावाक्य तीनोटापद निर्मित ।
'तत्' को अर्थ सदात्मा हो त्वं हो जीव यथार्थतः ॥
(३०६)
'असि' बोधक हो ऐक्य परमात्मा र जीवको ।
चिति प्रतीक हो प्रातिपदिकार्थक शब्दको ॥
(३०७)
यसको क्रमका साथ तात्पर्यमात्र लीकन ।
यथामति यथाशक्ति गर्दैजानेछु लेखन ॥
(३०८)

---

३. **तत्त्वमस्यादिवाक्योत्थं यज्जीवपरमात्मनोः ।
तादात्म्यविषयं ज्ञानं तदिदं मुक्तिसाधनम् ॥ – वाक्यवृत्तिः६**

४. **तत्त्वमस्यादिवाक्योत्थसम्यग्धीजन्ममात्रतः ।
अविद्यासहकार्येण नासीदस्ति भविष्यति ॥ – बृहदारण्यकोपनिषद्वार्तिकम्**

‘तत् त्वम् असि’ सुनी शिष्य भन्दैन ब्रह्म मैँ भनी ।
त्यो ‘तद्धास्य विजज्ञौ’ यो भन्दछिन् श्रुतिले अनि ।।
(३०९)
शिष्य क्यै पनि बोल्दैन बोल्दछिन् श्रुति कण्ठतः ।
सदात्मा उसले जान्यो महावाक्य सुनी स्वतः ।।
(३१०)
ब्रह्मोपदेश यो हैन यो सदात्मोपदेश हो ।
यल्ले ब्रह्म हुने हैन सदात्मा आफु बुझ्नु हो ।।
(३११)
उपदेश हुने जस्तो त्यस्तै मुमुक्षु बन्दछ ।
उपदेश भए ब्रह्म मुमुक्षु ब्रह्म बन्दछ ।।
(३१२)
गुरुको ‘अभयं ब्रह्म’ उपदेश नभै तब ।
‘अहं ब्रह्मास्मि’ को ज्ञान कसरी हुन्छ सम्भव ? ।।
(३१३)
बृ.उ.को ‘अभयं ब्रह्म’ उपदेश सुनेपछि ।
‘अहं ब्रह्मास्मि’को भाव मुमुक्षुमा हुने पछि ।।
(३१४)
महावचन के हो ? त्यो परिभाषा बुझौँ अब ।
तत्पश्चात् नै महावाक्य हुनेछ बुझ्न सम्भव ।।
(३१५)
यस सम्बन्धमा पैले बुझौँ [५]शङ्करको मत ।
यसले बुझिएला कि ! महावचन तत्त्वतः ।।
(३१६)

---

५. **संसर्गो वा विशिष्टो वा वाक्यार्थो नात्र सम्मतः ।**
**अखण्डैकरसत्वेन वाक्यार्थो विदुषां मतः ।। – वाक्यवृत्तिः ३८**

लेख्तछन् [६]चित्सुखाचार्य दर्शाउँदै यथार्थता ।
अखण्ड अर्थले युक्त 'तत्प्रातिपदिकार्थता' ॥
(३१७)

हुन्छन् तीनथरी वाक्य 'महावाक्य' 'अवान्तर' ।
हो सहायक तेस्रो त्यो 'उत्प्रेरक' सधैँभर ॥
(३१८)

'अभेदबोधकं वाक्यं महावाक्यम्' भनीकन ।
आत्मा र परमात्माको एकत्व हुन्छ शंसन ॥
(३१९)

'सत्यं ज्ञानं अनन्तादि' यी हुन् वाक्य अवान्तर ।
ब्रह्मस्वरूपको गर्छन् यिनी वर्णन सुन्दर ॥
(३२०)

उत्प्रेरक अरू वाक्य जति छन् वेदका सब ।
यिनै साधन हुन् बाह्य आभ्यान्तर गरी सब ॥
(३२१)

जहत् र अजहत् साथै जहत् र अजहत् गरी ।
लक्षणा पनि हुन् बाह्य अरू साधनकै सरी ॥
(३२२)

यिनमा एउटै मात्र लाग्ने हो [७]भागलक्षणा ।
'सोऽयम्' इत्यादिमा जस्तै, लाग्दैनन् अन्य लक्षणा ।
(३२३)

---

६. **संसर्गासङ्गिसम्यग्धीहेतुता या गिरामियम् ।**
**उक्ताखण्डार्थता यद्वा तत्प्रातिपदिकार्थता ॥ – तत्त्वप्रदीपिका १।१९**

७. **तत्त्वमस्यादिवाक्येषु लक्षणा भागलक्षणा ।**
**सोऽयमित्यादिवाक्यस्य पदयोरिव नापरा ॥ – वाक्यवृत्तिः ४८**

माथिका पङ्क्तिमा आयो 'तत्प्रातिपदिकार्थता' ।
नबुझी बुझ्न गाह्रो छ वाक्यज्ञान यथार्थता ।।

(३२४)

वाक्यका पद सारामा आउने जुन तत्त्व हो ।
नियतोपस्थित त्यै हो सबैमा अनुविद्ध हो ।।

(३२५)

सोही नै चिति हो शुद्ध 'तत्प्रातिपदिकार्थक' ।
तत् त्वम् असि सबैमा चित् अनुस्यूत सबैतक ।।

(३२६)

वाक्यका भित्र संश्लिष्ट चिति नै नबुझीकन ।
बुझिँदैन महावाक्य गहिरो नपढीकन ।।

(३२७)

बाह्य शब्दहरू घोकी नबुझी भित्रको चिति ।
जाँनिदैन महावाक्य के गर्छन् उपदेश ती ?

(३२८)

अति शालीन भाषामा बुझी वेदान्त तत्त्वतः ।
महावाक्य गरुन् विद्वान् उपदेश विशेषतः ।।

(३२९)

महावचन हो साक्षात् मुक्तिको मुख्य साधन ।
यही नै नबुझी बन्ने कसरी मुक्तिभाजन ? ।।

(३३०)

महावचन गाह्रो छ भनेर ठान्नुपर्दछ ।
श्रवणीय सँगै ज्ञेय पहिले जान्नुपर्दछ ।।

(३३१)

पदको ज्ञान हो मुख्य वाक्यज्ञानार्थ कारण ।
संसर्गजन्य होस् वाक्य वा विशिष्ट विशेषण ।।
(३३२)

पद नै नबुझी वाक्य बुझ्नलाई छ दुस्तर ।
पदज्ञान भएमात्रै वाक्यज्ञान हुने तर ।।
(३३३)

वाक्यको ज्ञानमा हुन्छ पदार्थज्ञान कारण ।
यो बुझेपछि नै होला वाक्याज्ञाननिवारण ।।
(३३४)

महावचनका साथ विभक्ति जुन आउँछ ।
वेदान्तमा भने नामपद त्यो कहलाउँछ ।।
(३३५)

त्यो कर्मकाण्डमा व्यक्त सुबन्तपद हो जुन ।
आख्यातपद मानिन्छ मीमांसामा छ शंसन ।।
(३३६)

वेदान्तमा छ आएको सिद्धार्थक तिङन्त हो ।
त्यही विभक्ति हो नामपदले अभिधेय हो ।।
(३३७)

'नामैव तद्धि' 'नामैव तद्भवत्यादि' शास्त्रतः ।
तिङन्तनाम मानिन्छन् जो सिद्धार्थकसंयुत ।।
(३३८)

अस्ति अस्मि असि ज्ञेय स्वरूपतः तिङन्त हुन् ।
सिद्धार्थकसँगै मिल्दा ती नामपद बन्दछन् ।।
(३३९)

कर्मसम्बद्ध आख्यात भाव्यार्थक सुबन्त हुन् ।
अस्तित्वमात्रसम्बद्ध सिद्धार्थक तिङन्त हुन् ॥
(३४०)

[8]सत्तान्वित भएकाले विभक्ति असि हो जुन ।
गर्छ प्रातिपदिकार्थताको त्यो प्रतिबोधन ॥
(३४१)

अनुष्ठेयार्थको जो छ प्रकाशक कुनै पद ।
सुबन्त पनि मानिन्छ आख्यातनामको पद ॥
(३४२)

आख्यात पनि मानिन्छ नाम सिद्धार्थबोधक ।
त्यस्तै नै नाम मानिन्छ जो छ सिद्धार्थबोधक ॥
(३४३)

[9]'भावप्रधानमाख्यातम्' भन्छ निरुक्तले जब ।
यो नामपदमा बन्छ क्रियापद गई तब ॥
(३४४)

छोटो विवेचना गर्दा महावचनअन्वित ।
तिङन्त असि हो नामपदबाट समन्वित ॥
(३४५)

---

८. अस्त्यस्म्यसीति च तिङन्तपदानि सन्ति, वेदान्तवाक्यनिलयानि तथापि तानि ।
नाऽऽख्यातशब्दनिजशक्तिधुरं वहेयुः, अस्तित्वमात्रविषया हि निषक्तिरेषाम् ॥
अस्त्यस्म्यसीति च पदं प्रचुरं क्रियायाः, वेदान्तवाक्यगतमादरतः पठन्ति ।
तन्मात्रतः सकलवेदशिरः पदानां सङ्घातसिद्धिरिति वेदशिरोनिषण्णाः ॥
– सङ्क्षेपशारीरकम् १।४९१, ४९३

९. धात्वर्थेन विशिष्टस्य विधेयत्वेन बोधने ।
समर्थः स्वार्थ यत्नस्य शब्दो वाख्यातमुच्यते ॥ – निरुक्तम्

‘तत् त्वम् असि’ महावाक्यसम्बद्ध ‘असि’ हो जुन ।
त्यसैबाट हुने प्रातिपदिकार्थकबोधन ।।

(३४६)

सर्वज्ञत्वविशिष्टै ‘तत्’ ‘त्वम्’ अल्पज्ञविशिष्ट हो ।
विशेषण दुवै हट्छन् रहने ‘असि’ एक हो ।।

(३४७)

‘असि’ प्रतीक हो ‘चित्’को ‘तत्’‘त्वम्’भित्र चिरन्तन ।
बस्ने नियतका साथ दुवैका भित्र चेतन ।।

(३४८)

त्यही चेतन हो प्रातिपदिकार्थक चिद्घन ।
‘तत्’‘त्वम्’ शोधनका पश्चात् रहन्छ शुद्ध चेतन ।।

(३४९)

‘अभयं वै’ छ जो वाक्य ‘तत् त्वम्’ वाक्यसमान हो ।
सबै उपाधि हुन् हट्छन् रहने चितिमात्र हो ।।

(३५०)

‘तत्’ ‘त्वम्’ यी एक अर्कामा छैनन् नित्य उपस्थित ।
त्यसैले होइनन् प्रातिपदिकार्थक वस्तुतः ।।

(३५१)

नियमेन सबैभित्र रहने चित् नियामक ।
सोही चित् शुद्ध हो तत्त्व त्यो प्रातिपदिकार्थक ।।

(३५२)

श्रवणीय अनुभूय शुद्ध चित् हो सदात्मक ।
त्यही नै हो महावाक्य अखण्डार्थकबोधक ।।

(३५३)

सुन्नुपर्ने महावाक्य शुद्ध चित् हुननिम्ति हो ।
श्रवणीय स्वशाखाकै महावचन एक हो ॥
(३५४)
महावचन साक्षात् हो मुक्तिको मुख्य कारण ।
नसुनी नबुझी वाक्य भय हुन्न निवारण ॥
(३५५)
अन्यथा पुग्न गाह्रो छ 'अहं ब्रह्मास्मि'मा नर ।
अन्यथा तर्न गाह्रो छ भवसागर दुस्तर ॥
(३५६)
धर्म वेदान्त संस्कार रहोस् सन्तानमा भनी ।
सूक्ष्म चर्चा गरेँ मैले इन्दिराकाव्यमा पनि ॥
(३५७)
मरेर आखिरी जाँदा कसले के र लानु छ ?
मुट्ठी बाँधी यहाँ आयो मुट्ठी खोलेर जानु छ ॥
(३५८)
कसैको न यहाँ क्वै छ एक्लै आउनु जानु छ ।
जाँदामा साथमा खाली पुण्यपापादि लानु छ ॥
(३५९)
पुण्यले स्वर्ग लैजान्छ लाने नरक पापले ।
शेष कर्महरू भोग्न फर्कनै पर्छ जीवले ॥
(३६०)
चौरासी योनि मध्येमा जीव जन्मन पुग्दछ ।
प्रारब्धले दियो जस्तो त्यस्तो नै भोग भोग्दछ ॥
(३६१)

म को हुँ ? किन आएको ? गन्तव्य आखिरी कहाँ ?
यी कुरा नबुझी मान्छे दौडिइन्छ जहाँ तहाँ ॥
(३६२)

यसै कारणले भन्छ श्रुति स्पष्ट गरीकन ।
'आत्मा वाऽरे' तिमी हेर गर श्रवण चिन्तन ॥
(३६३)

आफैँलाई स्वयं आफैँ नजानी नचिनीकन ।
अरूलाई तिमी को हौ ? भनेर सोद्धछौ किन ?
(३६४)

सारा अज्ञान तोडेर गुरु सामु गईकन ।
जिज्ञासा ब्रह्मको राखौँ अति नम्र भईकन ॥
(३६५)

गुरुले पनि हेरेर पात्रता योग्यता पनि ।
कैवल्य मुक्तिका लागि देलान् सद्ज्ञान नै अनि ॥
(३६६)

कैवल्य मुक्ति के हो त्यो ? सङ्क्षेपमा बुझाउन ।
यहाँ उल्लेख गर्ने छु स्वरूप अनि लक्षण ॥
(३६७)

बुझ्न होस् सजिलो ठानी लिई अद्वैत दर्शन ।
सारांशमा म गर्दैछु कैवल्य मोक्षशंसन ॥
(३६८)

[१०]कैवल्यमुक्तिका लागि हजारौँ जन लाग्दछन् ।
तिनमा पनि केहीले तत्त्वतः ब्रह्म जान्दछन् ॥
(३६९)

---

**१०. मनुष्याणां सहस्रेषु कश्चिद् यतति सिद्धये ।**
**यततामपि सिद्धानां कश्चिन्मां वेत्ति तत्त्वतः ॥ – गीता ७।३**

दर्शनश्रवणद्वारा परिपाक भईकन ।
विक्षेपमलदोषादि भस्म हुन्छन् डढीकन ॥
(३७०)
तत्पश्चात् मन [११]संस्वच्छ सूक्ष्म निर्मल बन्दछ ।
आत्माकै तुल्य धी बन्दा कैवल्यमुक्ति मिल्दछ ॥
(३७१)
कैवल्यमुक्तिका देख्छौँ धेरै पर्याय शब्दतः ।
मुक्ति कैवल्य निर्वाण श्रेय निःश्रेयसाऽमृत ॥
(३७२)
ब्रह्मलीन र सन्मुक्ति ब्रह्मप्राप्ति विदेहता ।
कैवल्यमुक्ति हुन् ब्रह्मसाक्षात्कार स्वरूपता ॥
(३७३)
[१२]विधेय हैन कैवल्य अध्यारोप हटाउनु –
मात्र कर्तव्य हो तुच्छ अज्ञान त्यो डढाउनु ॥
(३७४)
[१३]अध्यारोप भई सारा ब्रह्मभाव हराउँछ ।
निष्प्रपञ्च सदात्मामा यो प्रपञ्च उदाउँछ ॥
(३७५)

---

११. अत्यन्तनिर्मलत्वस्वच्छत्वसूक्ष्मत्वोपपत्तेरात्मनो बुद्धेश्चात्मसमनैर्मल्याद्युपपत्ते-रात्मचैतन्याकाराभासत्वोपपत्तिः । – गीता १८।५० शाङ्करभाष्य

१२. अत आत्मविषयं ज्ञानं न विधातव्यम्, किं तर्हि नामरूपाद्यनात्माध्यारोपणनिवृत्ति-रेव कार्या नात्मचैतन्यविज्ञानम्, अविद्याध्यारोपितसर्वपदार्थाकारैरेव विशिष्टतया गृह्यमाणत्वात् । – गीता १८।५० शाङ्करभाष्यम्

१३. अध्यारोपापवादाभ्यां निष्प्रपञ्चं प्रपञ्च्यते ।
नान्यत्र कारणात्कार्यं न चेत् तत्र न तद्भवेत् ।
मुमुक्षुणां बोधसिद्ध्यैः श्रुतिभिः कल्पितं क्रमः ॥ – ब्रह्मसूत्रकारिका

मिथ्यारोपित यो दृश्य अपवाद गरीकन ।
कैवल्य ब्रह्म नै बन्छ मुमुक्षु शुद्ध चिद्घन ॥
(३७६)

सालोक्यादि सबै मुक्ति वाचारम्भणमात्र हुन् ।
मुक्ति हो [१४]एक कैवल्य श्रुतिशास्त्रादि भन्दछन् ॥
(३७७)

सबै [१५]वेदान्तको लक्ष्य ब्रह्मात्मैक्यत्व हो जुन ।
अन्ततः सबको यौटै कैवल्य हो प्रयोजन ॥
(३७८)

कैवल्य [१६]ब्रह्मनिर्वाण आवागमनहीन हो ।
मुक्तका [१७]प्राण निस्कन्नन् यहीँ नै ब्रह्म बन्नु हो ।
(३७९)

कैवल्यमुक्तिमा जीव यहीँ नै ब्रह्म बन्दछ ।
[१८]ब्रह्म हो फेरि ऊ ब्रह्म बन्दछ श्रुति भन्दछ ॥
(३८०)

---

१४. कैवल्यमुक्तिरेकैव पारमार्थिकरूपिणी । – मुक्तिकोपनिषद् १।१७।१८

१५. सर्ववेदान्तसारं यद् ब्रह्मात्मैकत्वलक्षणम् ।
वस्त्वद्वितीयं तन्निष्ठं कैवल्यैकप्रयोजनम् ॥ – भागवत १२।१३।१२

१६. निर्गतं वानं गमनं यस्मिन्प्राप्ये ब्रह्मणि तन्निर्वाणं मोक्षम् ।
– गीता २।७२, नीलकण्ठव्याख्या (चतुर्धरी)

१७. न तस्य प्राणा उत्क्रामन्त्यत्रैव समवलीयन्ते ब्रह्मैव सन् ब्रह्माप्येति ।
– नृसिंहोत्तरतापनीयोपनिषद् ५

१८. न तस्य प्राणा उत्क्रामन्ति ब्रह्मैव सन् ब्रह्माप्येति । – बृहदारण्यकोपनिषद् ४।४।६

‘अथातः’ बाट जिज्ञासा कैवल्यको गरीकन ।
[१९]उपक्रम भएको छ कैवल्यार्थ चिरन्तन ॥
(३८१)

उपसंहारमा फेरि कैवल्य मुक्ति लीकन ।
आएको छ महावाक्य ब्रह्मात्मैक्य गराउन ॥
(३८२)

अभ्यासात्मक [२०]आवृत्ति भएका छन् सबैतिर ।
महावाक्य विवर्तादि कारिका छन् मनोहर ॥
(३८३)

अपूर्व यसमा आयो कैवल्यमुक्ति लीकन ।
फलझैँ फल कैवल्य ब्रह्मभाव सनातन ॥
(३८४)

[२१]अर्थवाद छ आएको कैवल्य नै बुझाउन ।
उपपत्त्यर्थ वेदान्तवाक्य छन् स्पष्ट शंसन ॥
(३८५)



---

१९. उपक्रमोपसंहारवभ्यासोऽपूर्वता फलम् ।
अर्थवादोपपत्ती च लिङ्गं तात्पर्यनिर्णये ॥ – बृहत्संहिता

२०. आवृत्तिरसकृदुपदेशात् ४।१।१।१

२१. विरोधे गुणवादः स्यादनुवादोऽवधारिते ।
भूतार्थवादस्तद्धानादर्थवादस्त्रिधा मतः ॥ – बृहदारण्यकोपनिषद्वार्तिक

# चौधौँ स्मृतिपुष्प – कैवल्यमुक्ति

मैले केही दिन र रजनी शोकसन्तप्त बन्दै,
काटेँ सारै सकससितले स्वास्थ्य आफ्नु नगन्दै ।
लागिन् टाढा प्रियसहचरी मौन सारै बनेर,
ऐले आई चरमवयमा बस्छु एक्लो भएर ॥

(३८६)

काटेँ धेरै विगत दिन ती इन्दिरा साथ मैले,
भोगेँ कैले सुखसयल या दुःख दारिद्र्य मैले ।
छोडी लागिन् परपर कता मार्गमै चट्ट ऐले,
बाँच्नैलाई अति कठिन भो एक्लिई आज मैले ॥

(३८७)

सोझी साध्वी सरल मनकी शुद्ध संस्कार राखी,
गर्थिन् सेवा जनक-जननी मान्यको भक्ति राखी ।
थोरै बोल्थिन् मधुर रसले पूर्णतायुक्त बोली,
राम्रो आफ्नू मुखकमलमा पूर्ण माधुर्य घोली ॥

(३८८)

थोरै इच्छा धन र गहना वस्त्रमा राख्तथिन् ती,
भोकै बस्थिन् उदर सबको भर्दथिन् नित्य नै ती ।
बाँडी खाऊँ स्वजन सबले भावना राख्तथिन् ती,
आए कोही अतिथि घरमा देवता मान्दथिन् ती ॥

(३८९)

जाऊँ भन्थिन् हरदम कतै तीर्थ धामादिमा ती,
इच्छा जस्तै सबतिर पुगिन् चारधामादिमा ती ।

सुन्थिन् आफ्नै पतिसँग सधैँ वेदवेदान्त आदि,
राख्थिन् श्रद्धा परमशिवमा ब्रह्म सच्चित् अनादि ॥
(३९०)
सुन्थिन् पुराण अनि विष्णुसहस्रनाम,
गीता थियो प्रिय सधैँ अनि रामनाम ।
आसक्ति नै कम थियो घरसम्पदामा,
मोहादि ती कम थिए सब इन्दिरामा ॥
(३९१)
हेर्दाहेर्दै सब बदलियो जीर्ण भो यो शरीर,
सम्झी आफ्ना विगत दिन ती बन्छु सारै अधीर ।
मेरा आफ्ना कति गइसके जान केही तयार,
आधा अङ्गै जब गइसक्यो भन्नु धेरै छ के र ?
(३९२)
वेदान्ती भै सकल जगतै स्वप्न संसार ठान्छु,
बाँच्नै पर्ने तर पनि यहीँ अर्ध यो सत्य मान्छु ।
मिथ्या यो हो भ्रम सकल नै दृश्य अज्ञानजन्य,
जीवात्मा हो चिति र जडको ग्रन्थि जो सत्यशून्य ॥
(३९३)
बाँच्छौँ हामी परवश भई आफुलाई नजानी,
आफैँ को हो ? परिचय विना देह नै सत्य मानी ।
हाम्रो यो हो सकल तन नै भावषड्को विकार,
जन्मेदेखिन् मरणतक नै लान्छ यै षड्विकार ॥
(३९४)

आयौँ हामी जनमन यहाँ मार्ग कस्तो समाई,
हामी जान्छौँ मरण पछि लौ फेरि काहाँ हराई ।
पायौँ मान्छे जनम कसरी ? यो सबै नै नजानी,
बाँचेका छौँ पशुसरह नै मर्छु भन्ने नठानी ॥
(३९५)

शोचौँ हामी अब त सबले ध्यानदी भित्र हेरी,
हिँड्ने होला ! कति दिन यहाँ मृत्युलाई नटेरी ।
हामी जागौँ झटपट गरी आफु नै चिन्नलाई,
होला देरी नतर त अहं ब्रह्म भै जानलाई ॥
(३९६)

जाँदा एक्लै स्वजन विनु नै जानु पर्ने सबैले,
हाम्रो आफ्नै तन पनि कठै साथ जाँदैन कैल्यै ।
जाँदा हामी सहज सँगमा पुण्य या पाप लान्छौँ,
हाम्रो आफ्नै शुभ अशुभ ली स्वर्ग या नर्क जान्छौँ ॥
(३९७)

भोगेर कर्मफल फर्कनु पर्छ फेरि,
प्रारब्ध भोग चिति तोक्तछ कर्म हेरी ।
पञ्चाग्निमा हवन भैकन झर्नुपर्छ,
चौरासिलाख जुनिमा सब पर्नुपर्छ ॥
(३९८)

प्रारब्धले नरजुनी पनि मिल्न सक्छ,
यद्वा कतै पशुजुनी पनि मिल्न सक्छ ।
मिल्ला कतै पशुजुनी तब भोगमात्र,
गर्ला कदापि पशु हुन्न सुकर्म पात्र ॥
(३९९)

ऐले मिल्यो नरजुनी अति भाग्यमानी,
सत्कर्ममा बढ अमूल्य छ याम ठानी ।
मिल्दैन फेरि नरको तन याद राख,
सद्ब्रह्मबोध गर शेष कुनै नराख ॥
(४००)
मैले लेखेँ जति पनि कुरा ग्रन्थको सार यो हो,
सुन्दा लाग्ने कटुतर बुझे मुक्तिको द्वार यो हो ।
बुझ्नैलाई कठिनतर यो ब्रह्मवेदान्तसार,
बुझ्नेलाई सहज यसले लान्छ भूसिन्धु पार ॥
(४०१)
घुम्दाघुम्दै सब दिन गए व्यर्थका काम गर्दै,
मैले ठाने अमर हुँ भनी बाँच्छु हुङ्कार गर्दै ।
मैले गर्ने गरिन कहिल्यै तुच्छमा नै रमाएँ,
बेकारैमा वय सब गयो आज पो होस पाएँ ॥
(४०२)
ऐले संझेँ समय सकियो देह भो जीर्ण सारा,
मेरा सारा अवयवहरू शीर्ण छन् बेसहारा ।
सुन्ने देख्ने अब कम भयो पङ्गु छन् हात पाउ,
ऐले आई त्रसित म भएँ हाय ! काहाँ म जाऊँ ?
(४०३)
पैले मेरा सब दिन बिते पुत्रजायादि भन्दै,
आए मेरा अतलमनमा एषणा नग्न बन्दै ।
अज्ञानी भै जमिनधन वा सम्पदामा हराएँ,
जाने वेला अब हुन गयो काल देखिन् डराएँ ॥
(४०४)

हे राजन् ! हौ अभय चिति नै भन्दछन् याज्ञवल्क्य,
तत्पश्चात् नै अनुभव भयो ब्रह्ममैँ वेदवाक्य ।
यै हो हाम्रो श्रुति सकलको सार कैवल्यमुक्ति,
यस्मा केही ननु न च कुनै हुन्न तर्कादि जुक्ति ॥
(४०५)

ब्रह्मसूत्रविषे मैले लेखेँ सार र कारिका ।
मैले पाइन कैवल्य मुक्तिको सूत्र भो फिका ॥
(४०६)

भाष्यमा पनि सुस्पष्ट छैन कैवल्यशंसन ।
सूत्रानुसार नै भाष्य हुने गर्दछ लेखन ॥
(४०७)

व्यासबाट भयो यस्तो त्रुटि आश्चर्य मान्दछु ।
कैवल्यमुक्तिका लागि वेदान्तशास्त्र ठान्दछु ॥
(४०८)

श्रीव्यासकन यो ज्ञान दिए नारदले अरे ।
कैवल्य मुक्ति उल्लेख श्रीभागवतमा गरे ॥
(४०९)

व्यासनारदसंवादबाट स्पष्ट भयो अरू ।
वेदान्तज्ञान मिल्दैन ब्रह्मज्ञानी विना गुरु ॥
(४१०)

सत् आत्मा नै परमचिति हो आफ्नु नै हो स्वरूप,
जान्नै पर्ने सकल जनले सच्चिदानन्दरूप ।
आफैँलाई सहज नबुझी ब्रह्म जान्ने कसोरी ?
सत् आत्मा नै गुरुसँग बुझौँ बुझ्न सक्छौँ जसोरी ॥
(४११)

आत्मा जान्ने प्रथम विधि हो तत्त्वमस्यादि वाक्य,
आत्मा के हो परिचय नभै सुन्नु के वेदवाक्य ?
आत्मा सत् हो स्फुरण जब भो मोक्षको द्वार खुल्छ,
योबाटै नै क्रमसँग बढी अन्तमा मुक्त हुन्छ ॥
(४१२)



# पन्ध्रौँ स्मृतिपुष्प – भूमाविद्या

सनत्कुमारले भूमाविद्या नारदमा भने ।
ऋषिनारद योबाटै ब्रह्मज्ञानी स्वयं बने ॥
(४१३)

शोकबाट हुने पार इच्छा राखेर नारद ।
गएथे स्कन्दका साथ भयो संवाद मोक्षद ॥
(४१४)

सनत्कुमारले सोधे पढेका कति छौ भनी ।
पढेको वेदशास्त्रादि भने नारदले अनि ॥
(४१५)

नाममात्रै पढेका छौ नामदेखि लिई अब ।
सुखसम्म सबै जान भूमा ब्रह्म भनी सब ॥
(४१६)

भूमा नै सुख हो हुन्न अल्पमा सुख नारद ।
भने कुमारले जान भूमा ब्रह्म विशेषतः ॥
(४१७)

केही देख्तैन सुन्दैन भूमाले अल्पले तर ।
देख्छ सुन्दछ यो मर्त्य दुःखस्वरूप दुस्तर ॥
(४१८)

प्रतिष्ठित कहाँ भूमा ? भन्ने नसोध नारद ।
“स्वे महिम्नि यदि वा न महिम्नि’ बुझ तत्त्वतः ॥
(४१९)

आफ्नो नै महिमामा त्यो भूमा हुन्छ प्रतिष्ठित ।
आफ्नू नै महिमामा वा भूमा हुन्न प्रतिष्ठित ॥
(४२०)
तल माथि अगाडि र दायाँ बायाँ पछाडिमा ।
भूमै भूमा सबैतर्फ तिमीमा उसमा ममा ॥
(४२१)
भूमामा नै अहङ्कार गरी आदेश नै नर ।
तल माथि म नै भन्छ दायाँ बायाँ सबैतिर ॥
(४२२)
आत्मस्वरूपले भूमा श्रुति आदेश गर्दछ ।
तलमाथि सबैतर्फ आत्मा छ श्रुति भन्दछ ॥
(४२३)
यो जानी जसले देख्छ यस्को मनन गर्दछ ।
त्यो आत्मरतिका साथै त्यो आत्मक्रीड बन्दछ ॥
(४२४)
आत्ममिथुन भै आत्मानन्द स्वराट् बनीकन ।
सम्पूर्ण लोकमा घुम्छ यथेच्छ गति लीकन ॥
(४२५)
जल्ले जान्दछ योभन्दा विपरीत र झर्दछ ।
अन्यराट् क्षय्यलोकी हो र स्वेच्छा गति रुक्तछ् ॥
(४२६)
आत्मै भूमा भनी जान्यो जसले उसका सब ।
आत्माबाटै सबै हुन्छन् प्राणमन्त्रादिका तक ॥
(४२७)

विद्वान्ले मृत्यु देख्तैन रोग दुःखहरू पनि ।
आत्मरूप सबै देख्छ सबैको प्राप्य हो अनि ॥

(४२८)

एकदेखि हुँदै आत्मा सहस्र बीस बन्दछ ।
यसको फल सम्प्राप्ति यसरी श्रुति गर्दछ ॥

(४२९)

"आहारशुद्धौ सत्त्वशुद्धिः सत्त्वशुद्धौ ध्रुवास्मृतिः ।
स्मृतिलम्भे सर्वग्रन्थीनां विप्रमोक्षः ॥"

(४३०)

आहार शुद्धिले शुद्ध अन्तःकरण बन्दछ ।
अन्तःकरण शुद्धिले स्मृति निश्चल बन्दछ ॥

(४३१)

स्मृति प्राप्त जसै हुन्छ सम्पूर्ण ग्रन्थि टुट्तछन् ।
ग्रन्थि टुट्छन् जसै सारा वासना क्षीण बन्दछन् ॥

(४३२)

यसरी स्कन्दकाद्वारा उपदेश सुनी सब ।
भए नारदका सारा वासना क्षीण नै तब ॥

(४३३)

सनत्–नारदसंवाद छान्दोग्यमा पढीकन ।
भूमाविद्या गरेँ मैले अति सङ्क्षिप्त वर्णन ॥

(४३४)

भूमाविद्या जसकन मिल्यो वासना क्षीण हुन्छन्,
सारा ग्रन्थि क्षय हुन गई ग्रन्थि निर्ग्रन्थि बन्छन् ।

सारा कुण्ठा क्षय हुन गई मुक्तिको द्वार खोली,
ज्ञानी जाला परमपदमा मुक्त भै कर्म पोली ॥
(४३५)

मेरी पत्नी प्रियसहचरी इन्दिरा यै सुनेर,
लागिन् बाटो परमपदको ब्रह्मलीना बनेर ।
भूमाविद्या श्रवण अथवा पढ्छ जो मुक्त बन्छ,
यो हो बाटो परमपदको यै शरत् स्पष्ट भन्छ ॥
(४३६)



# सोह्रौँ स्मृतिपुष्प – मुक्तिमार्ग

एक्लै छु आज म ठुलो वनभित्र यद्वा,
क्वै छैन साथ पथभ्रष्ट भएसरी वा ।
आत्तिन्छ यो मन कता कुन मार्ग जाऊँ ?
हेराम ! लौ न कसरी अब पार पाऊँ ?
(४३७)

काट्तै छु याम सब दिक्क भएर आज,
भो शून्यझैँ सकल मानवको समाज ।
जाऊँ जतातिर उतै सब शून्य देख्छु,
सोही विरक्तिपनभित्र म काव्य लेख्छु ॥
(४३८)

बन्दैछ जीर्ण र जरामय यो शरीर,
बन्दै गएँ व्यथित यो मन भो अधीर ।
लाग्दैन लेख्न मन पढ्न विरक्त लाग्छ,
लामा भए दिन र रात थकाइ लाग्छ ॥
(४३९)

वेदान्त बुझ्छ कसले ? कससाथ बोलौँ ?
यो शास्त्रको गहनता कससाथ खोलौँ ?
लेखेँ किताब सब यी कसमा बुझाऊँ ?
ब्रह्मज्ञ सज्जन गुणी नर को म पाऊँ ?
(४४०)

छन् द्रव्यका वश सबै जति देख्छु आज,
यस्तै भयो सकल आज कि ! यो समाज ।

संस्कारसंस्कृति भए पर दूर लागे,
ज्ञानी समाज सकिए कि ! त दूर भागे ॥
(४४१)

संसार कालवश भैकन कालग्रस्त,
यै कालबाट सबको हुन जान्छ अस्त ।
आब्रह्म सानु भुसुनातक कालवश्य,
यल्ले चपाउँछ चराचर नै अवश्य ॥
(४४२)

प्राणी छौँ जति अल्पजीवन लिई बाँच्छौँ डराईकन,
यद्वा सागरको तरङ्गसरहै अल्पन्छ यो जीवन ।
राम्रो स्वस्थ शरीर बन्दछ छिटै बूढो लुरे जर्जर,
एक्लो भैकन बाँच्नुपर्दछ यहाँ भै कालले थर्थर ॥
(४४३)

अत्यन्त अस्थिर र चञ्चल सृष्टि सारा,
यो पाञ्चभौतिक शरीर छ बेसहारा ।
प्रारब्धका वश परीकन बाँच्नु पर्छ,
यल्ले घुमाउँछ जतातिर नाच्नु पर्छ ॥
(४४४)

हेर्दैन मानिस कठै किन ? भित्र तर्फ,
दौडिन्छ बाहिर सधैँभरि भोगतर्फ ।
जान्दैन आफुकन आफु हुँ को ? भनेर,
आफैँ नजानिकन जान्छ कठै मरेर ॥
(४४५)

श्रीसम्पदा सकल हुन् चल नाशयुक्त,
हो ग्राम्य भोग पनि दुर्दय कालयुक्त ।
अध्यासजन्य जड मायिक दृश्य सारा,
आभास हो सकल सच्चिति हो सहारा ।
(४४६)

को जान्छ साथ धन दौलत पुत्र दारा ?
यी घाटसम्म रहने सँग साथ सारा ।
को गर्छ शोक कसको किन गर्नु शोक ?
अज्ञानजन्य सब मोह र तुच्छ शोक ।।
(४४७)

गीता पढौँ सकल शाङ्कर भाष्यलाई,
त्यो ज्ञान हो अति परोक्ष सुबोधलाई ।
हामी गरौँ श्रवण चिन्मय ब्रह्मलाई,
तर्ला मुमुक्षु अनि चिन्मय मुक्ति पाई ।।
(४४८)

हामी सुनौँ उपनिषद् गुरुबाट पैले
टीका र भाष्य सब पढ्नु पर्‍यो क्रमैले ।
गीता बुझिन्छ जब हुन्छ जसै विवेक,
सद्ब्रह्ममात्र सबतर्फ बुझिन्छ एक ।।
(४४९)

गीता पढौँ उपनिषद् पहिले पढेर,
गीतार्थ हो उपनिषद्मय हो भनेर ।
गीता पढौँ सकल शाङ्करभाष्यपूर्ण,
जिज्ञासुले सहज बुझ्दछ सूत्र पूर्ण ।।
(४५०)

यो ब्रह्मसूत्र सब पढ्नु छ मुक्तिलाई,
आद्यन्त सूत्र सब हुन् क्रममुक्तिलाई ।
कैवल्यनिम्ति त कुनै पनि छैन सूत्र,
कर्मी निमित्त सब हुन् बुझ ब्रह्मसूत्र ।।
(४५१)

कैवल्यमुक्ति जब मिल्दछ इन्द्रियादि,
डढ्छन् यहीँ सकल चित्त र बुद्धि आदि ।
हुन्छन् समाप्त सब जन्मनु मर्नु आदि,
बन्ला मुमुक्षु अनि ब्रह्म स्वयं अनादि ।।
(४५२)

ब्रह्मै थियो र पहिले पछि ब्रह्म बन्छ,
यो नै सधैँ उपनिषद् शुभशास्त्र भन्छ ।
यै हो परात्पर र निर्भय मुक्तिमार्ग,
भोगार्थ हुन् सकल मायिक हुन् कुमार्ग ।।
(४५३)



# सत्रौँ स्मृतिपुष्प – कालातीतमार्ग

थिए वाजश्रवापुत्र वाजश्रवाख्य नामले ।
गरेथे यिनले यज्ञ गरी सर्वस्व दान नामले ।।
(४५४)

सोधे बालक छोराले बूढा गाई दिए सरी ।
मेरो दान कहाँ कस्मा गर्नु हुन्छ ? यसै गरी ।।
(४५५)

भने पिता रिसाएर मृत्युलाई दिने जब ।
नाचिकेता हिँडे सद्य यमका लोकमा तब ।।
(४५६)

यमका लोकमा पुग्दा थिए यम प्रवासमा ।
नचिकेता बसे भोकै तीनरात प्रवासमा ।।
(४५७)

फर्केर यमले सोधे आएर पाहुना घर ।
तीन रात बस्यौ भोकै तीनोटा माग लौ वर ।।
(४५८)

मागेथे वर पैलो त्यो पिता खुशी हउन् भनी ।
अग्निचयन मागेथे दोस्रोमा वर नै अनि ।।
(४५९)

स्वर्ग प्राप्त हुने तेस्रो वर माग भनीकन ।
यमले प्रेरणा गर्दा भागेनन् बटुले किन ?
(४६०)

सोधेथे मृत जीवात्मा कोही रहन्छ भन्दछन् ।
रहन्न भन्दछन् कोही सन्देह व्यक्त गर्दछन् ॥
(४६१)
तेस्रो वर त्यही मागे मनुष्य मृत्यु भैकन ।
कतै जान्छ कि ! जाँदैन मलाई सुन्न भो मन ॥
(४६२)
दिए उत्तर यो जान्न जिज्ञासा देवले गरे ।
सूक्ष्म धर्म भएकाले सकिन्न जान्न नै अरे ॥
(४६३)
यो छोडेर तिमी माग अर्को वर कुनै अब ।
जे जे माग्छौ सबै दिन्छु न माग वर यो अब ॥
(४६४)
यमले जब यो यस्तो भने ती वटुले पनि ।
पुरानै वर मागेथे उनले यसरी अनि ॥
(४६५)
सन्देह देवता गर्थे जानिन्न सजिलै भनी ।
तपाईंतुल्य पाइन्न यो जान्ने देव ! क्वै पनि ॥
(४६६)
त्यसै कारण सोही म तृतीय वर माग्दछु ।
दिनुहोस् वर सोही नै हात जोडेर माग्दछु ॥
(४६७)
भनेथे यमले माग पुत्र-पौत्र शतायुषः ।
धेरै पशु सुवर्णादि माग आफ्नै शतायुष ॥
(४६८)

मालामाल हुने माग कामना पूर्ण गर्छु म ।
यथेच्छ युवती राम्रा रथादियान दिन्छु म ॥
(४६९)
न माग तर हे वत्स ! मृत्यु सम्बन्धको वर ।
यो जाने पनि जानिन्न भन्न बुझ्न छ दुस्तर ॥
(४७०)
भनेथे वटुले मिथ्या यी नास्छन् इन्द्रियादिक ।
तपाईंमैं रहुन् सारा चाहिन्नन् यी रथादिक ॥
(४७१)
तृतीय वर मागेथें त्यही नै दिनुहोस् वर ।
त्यो भन्दा अन्य चाहिन्न लोभ्याऊ जति नै तर ॥
(४७२)
यसरी यमले गर्दै परीक्षा नचिकेतको ।
श्रेय र प्रेय मध्येमा गर्ने वरण श्रेयको ॥
(४७३)
भने ती यमले लोभ मैले जति दिए पनि ।
लोभिएनौ अविद्यामा लोभिने लान्छु मै अनि ॥
(४७४)
अविद्याले छ जो ग्रस्त स्वयं पण्डित मान्दछ ।
अन्धाका पछि लागेका अन्धाझैं नष्ट बन्दछ ॥
(४७५)
धनलम्पट अज्ञानी जान्दैन मुक्तिसाधन ।
दुश्चक्रमा सधैं पर्छ मेरा वश परीकन ॥
(४७६)

यो आत्मा सुन्न पाइन्न जानिदैन सुने पनि ।
आश्चर्यरूप हो जान्ने भन्ने आश्चर्य हो अनि ॥
(४७७)
अयोग्य व्यक्तिले भन्दा आत्मा जानिन्न निश्चय ।
अत्यन्त सूक्ष्म आत्मा त्यो अविशेय सुनिर्भय ॥
(४७८)
जानिन्न तर्कले आत्मा शास्त्रज्ञ उपदेशित ।
आत्मा जानिन्छ दुर्ज्ञेय नचिकेत ! सुनिश्चित ॥
(४७९)
अनित्य हुन् सबै जो छन् यहाँ लौकिक साधन ।
अनित्य निधिका द्वारा आत्मा पाइन्न चिद्‌घन ॥
(४८०)
त्यो गूढ स्थानमा बस्ने बुद्धिगह्वरसंस्थित ।
अध्यात्मयोगका द्वारा प्राप्तव्य हो सुनिश्चित ॥
(४८१)
आत्मा प्राप्त जसै हुन्छ हर्षशोक हटीकन ।
रमाउँदछ आत्मामै मुमुक्षु धीर तत्क्षण ॥
(४८२)
आत्मतत्त्व सुनी जानी देह सङ्घातका पर ।
खुला हो मुक्तिको द्वार नाचिकेत ! परात्पर ॥
(४८३)
आत्मा जन्मिन्न मर्दैन स्वतः वा अन्य हेतुले ।
अज शाश्वत हो नित्य आत्मा मर्दैन अस्त्रले ॥
(४८४)

मार्नेले मार्दछु आत्मा मर्नेले मार्छ ठान्दछ ।
जान्दैनन् ती दुवै आत्मा आत्मा मार्छ न मर्दछ ॥
(४८५)

आत्मा हो सानुमा सानु ठुलोमा अति हो ठुलो ।
जीवका मनका भित्र बस्ने हो त्यसको थलो ॥
(४८६)

वेदाध्ययनले यद्वा धारणा शक्तिले अनि ।
आत्मा अलभ्य हो यद्वा धेरै श्रवणले पनि ॥
(४८७)

मुमुक्षु जुन आत्माको साक्षात् वरण गर्दछ ।
त्यसै मुमुक्षुलाई नै आत्मा ज्ञातव्य बन्दछ ॥
(४८८)

जस्का ब्रह्मसँगै क्षेत्र दुवै नै भात बन्दछन् ।
मृत्यु बन्दछ तर्कारी कसले जान्न सक्तछन् ?
(४८९)

आत्मा हो रथी यो जान यस्को रथ शरीर हो ।
बुद्धि हो सारथी त्यस्को त्यस्तै मन लगाम हो ॥
(४९०)

विषयादिक हुन् क्षेत्र आत्मालाई चराउने ।
गरी रूपक यो वेद आत्मालाई चिनाउने ॥
(४९१)

शरीर इन्द्रियै साथ मन युक्त भईकन ।
अध्यासयुक्त आत्मा हो भोक्ता भन्छन् गुणी जन ॥
(४९२)

इन्द्रियादि अपेक्षाले विषय श्रेष्ठ वा पर ।
त्योभन्दा मन हो श्रेष्ठ त्योभन्दा बुद्धि हो पर ॥
(४९३)

बुद्धिभन्दा महत्तत्त्व उत्कृष्ट हो अझै पर ।
अव्यक्त श्रेष्ठ हो यद्वा मूला प्रकृति हो पर ॥
(४९४)

त्योभन्दा श्रेष्ठ आत्मा हो यद्वा पुरुष हो पर ।
त्योभन्दा पर क्यै छैन कैवल्य मुक्ति हो पर ॥
(४९५)



# अठारौँ स्मृतिपुष्प – प्रातिभासिक संसार

के लेखुँ ? यो कलमले किन लेख्नु भन्छ ?
लेख्तै गएर बिचरो बीच मै अडिन्छ ।
घोरिन्छ निश्चल बनीकन फेरि लेख्छ,
जे लेख्छ भित्र मनको इतिवृत्त लेख्छ ॥
(४९६)

के लेख्छु ? यन्त्रसरि भैकन थाह हुन्न,
कल्ले चलाउँ छ कहाँ बसी सुद्धि हुन्न ।
नाँची रहेँछु नबुझी कति नाच्नुपर्ला ?
यो सास चल्छ कति यो कहिले ठहर्ला ?
(४९७)

वेदान्त पढ्दछु र लेख्तछु नित्यजस्तो,
छोड्नै म सक्तिन नसासरि लाग्छ यस्तो ।
लेखौँ म खै अझ हरे ! कतिसम्म नाथ !
पढ्ने गयो चलन सिर्जन भो अनाथ ॥
(४९८)

चाहन्न भेट्न अब मानिस वृद्धलाई,
चाहन्न वृद्धजनका सँग बोल्नलाई ।
मातापिता तनयनिम्ति भए कि ! भार,
सेवा सुसार तिर हुन्न कुनै तयार ॥
(४९९)

एक्लो बूढो विधुर वा विधवा भएर,
बाँच्नैछ मुस्किल अपाङ्ग लुलो भएर ।
पाएर दीर्घ वय भो अभिशाप त्यस्को,
भै अर्थलोलुप सधैँ दिन बित्छ जस्को ॥
(५००)

ठानिन्छ वृद्धवय हो वरदानपूर्ण,
जो ब्रह्मचिन्तन गरेर हुने प्रपूर्ण ।
मेरा निमित्त चरितार्थ छ यो म ठान्छु,
सद्ब्रह्मचिन्तन गरेर म काल काट्छु ॥
(५०१)

ऐले म बस्छु घर आश्रमतुल्य ठानी,
सन्न्यस्त भै सकल यो भ्रमतुल्य ठानी ।
प्रारब्धलभ्य वय बाँच्नुछ शान्तिसाथ,
गर्लान् जसो शरण छु प्रभुमा अनाथ ॥
(५०२)

भन्छन् अनाश्रमि कुनै कि ! त आश्रमी म,
ज्ञानी हुँ वा शठ हुँ वा कसरी भनौँ ? म ।
जे जे भनुन् बुधहरू म सुनेर हाँस्छु,
सद्ब्रह्मचिन्तन गरी भ्रमजाल नास्छु ॥
(५०३)

अध्यासजन्य तन हो चिति निर्विकार,
संस्कार पूर्वजुनिका सँग बार बार ।
पाएर बुद्धिसँग चित् अनि जीव बन्छ,
भोगेर कर्म पछि गैकन ब्रह्म हुन्छ ॥
(५०४)

लाखौँ अनन्त जुनिमा घुमि दुःख पाई,
या स्वर्ग या नरकभोग सबै बिताई ।
पञ्चाग्निमा हवन भै अति दुःख पाई,
जन्मन्छ नै अचर वा चर योनि पाई ॥
(५०५)

भोगेर भोगपछि जन्मन झर्नुपर्छ,
पञ्चाग्निको असह भत्भत खप्नुपर्छ ।
जाँदाभने द्विविध देव र पितृमार्ग,
सुस्पष्ट देवपथ हो अनि धूममार्ग ॥
(५०६)

लोकाग्निमा हवन भै क्रमले झरेर,
पञ्चाग्नि आदि अति दुःख सबै सहेर ।
सौभाग्यले मनुज भै द्विज जन्म पायौ,
पत्नी भई प्रियतमा घरमा उदायौ ॥
(५०७)

प्रारब्धले मिलन भो शुभ कर्मबाट,
भोग्यौ सँगै सुख र दुःख गरेर आँट ।
वर्षौं बहत्तरबस्यौँ तनयादि साथ,
छोडी गयौ सकल आज भए अनाथ ॥
(५०८)

जानै छ एक दिन ता सबले अवश्य,
त्यो काल दुर्जय कसैसँग छैन वश्य ।
राजा र रङ्क नभनेर चपाउँदो छ,
खाने कुरा तदपि काल न पाउँदो छ ॥
(५०९)

भै कालका वश गयौ म थिएँ सँगैमा,
हेर्दै थिएँ अलपियौ र मिल्यौ स्वचित्मा ।
यो सत्य हो तर तिमी वचनै अपूर्ण,
राखी गयौ हृयभो यसबाट चूर्ण ॥
(५१०)

चौरासिउत्सवसँगै गत वर्ष थाल्यौँ,
वर्षैभरी चलिरह्यो व्रत पूर्ण पाल्यौ ।
चौरासिपूर्ण नहुँदै सहसा हरायौ,
अर्धाङ्गिनि ! अधमरो किन हो बनायौ ?
(५११)

चौरासिउत्सव मनाउन निम्ति प्यारा,
हाम्रा थिए स्वजन उत्सुकपूर्ण सारा ।
प्यारी गयौ स्वजन छन् बहुतै हताश,
हामी भयौँ विकल पङ्गु महानिराश ॥
(५१२)

पत्नी सुपुत्र पति यी सब एक नाश,
बाँच्छन् कठै सकलको हुनजान्छ नाश ।
आत्मा छ सत्य चिति शाश्वत हो अनन्त,
कस्का निमित्त किन शोक गरौँ ? म अन्त ॥
(५१३)

को को गयो ? सँग मरीकन अन्त जाँदा ?
के के लग्यो सँग कठै मृत गात्र जादाँ ।
जाँदैन साथ धन पुत्र पति र गोत्र,
जाने छ साथ शुभ पुण्य र पापमात्र ॥
(५१४)

शोकाग्नीले द्रवित भैकन अश्रुधारा,
भर्छन् तिनैकन लिई स्मृतिकाव्य धारा ।
लेख्तै छ यो कलम आँशु खसालि धेर,
शोकाग्निको जलन भित्र सबै पिएर ॥
(५१५)

बिर्सिन्न बिर्सन गरौँ जति नै प्रयास,
ताजा भएर उति आउँछ बढ्छ सास ।
शोकाग्निले गलित जीर्ण बनाउँदो छ,
छाला र हाड अवशेष गराउँदो छ ॥
(५१६)

भन्छन् सदैव पतिका सँगमा सती ती,
जान्छन् गयौ पति विना भयली न कत्ति ।
प्रारब्धलब्ध वय पूर्ण हुँदा नसम्म,
प्रस्थान हुन्न बस इन्दु ! भएर ब्रह्म ॥
(५१७)

रोगी थियौ व्यथित जीर्ण थियौ असाध्य,
धेरै बचाउँन भयो श्रम कष्टसाध्य ।
जस्तै गरे पनि गयौ सकिएनथाम्न,
योबाट छैन पछुतो मन छैन खिन्न ॥
(५१८)

मेरो उमेर पनि आज पचासि लाग्यो,
गल्दै गयो तन समस्त र फूर्ति भाग्यो ।
इच्छा छ जीवित भई रहने अचम्म,
बाँच्ने अभै किन हरे ! कति वर्षसम्म ?
(५१९)

मेरा समस्त अविभावक गैसके ती,
साथीहरू कति गए कि ! तयार छन् ती ।
हेर्दा सबैतिर ममा छ विरक्ति गाढा,
सद्ब्रह्म चिन्तन गरी भ्रम पार्छु टाढा ॥
(५२०)
वेदान्तसाधनचतुष्टय मोक्षसम्म,
मेरो छ रक्तकणमा सबतर्फ टम्म ।
झन् झन् विरक्तिपन वृद्धि हुँदैछ मेरो,
यल्ले हटाउँछ अवश्य तमान्ध घेरो ॥
(५२१)
यो काव्य हो स्मृति र शोक समग्रताको,
यो स्नेह हो तनयको तनयाहरूको ।
यो हो वधू सकल नाति र नातिनीको,
श्रद्धाञ्जलि स्मृति पनाति पनातिनीको ॥
(५२२)
यो हो स्मृति स्वजनको भगिनीहरूको,
भाञ्जी र भानिज सबै भतिजाहरूको ।
वासिष्टबन्धु सबको र भतिजीहरूको,
यो माइती र घरको स्मृति इन्दिराको ॥
(५२३)
श्रद्धासुपुष्प सबको यसमा क्रमैले,
राखी प्रकाशन भयो स्मृतिकाव्य ऐले ।
मूर्च्छा परी अधमरो भई वेदनाले,
लेख्यो अतिद्रवित भैकन लेखनीले ॥
(५२४)

सन्तप्त भै मन फुट्यो अति पग्लिएर,
त्यै आँशुको द्रवभरी करमा लिएर ।
पोख्तैछ तप्त मनको कवि दुःख सारा,
एक्लो भयो विधुर वृद्ध र बेसहारा ॥
(५२५)

यो शोककाव्य नभई स्मृतिकाव्य मैले,
सङ्क्षिप्त लेखन गरैँ स्मृतिनिम्ति ऐले ।
जन्मिन्छ जो मरण हुन्छ अवश्य ठानी,
शोकार्त धेर नहुने अति बुद्धि मानी ॥
(५२६)

यो जन्ममृत्यु अनि सिर्जनसर्वनाश,
यो चल्छ खेल चितिको सब एक नाश ।
यो सृष्टिमा चिति पसे पनि टाँसिदैन,
स्रष्टा महाप्रलयमा पनि नाँसिदैन ।
(५२७)

द्रष्टा र दृष्टि दुइटै सब हुन् अभिन्न,
स्रष्टा र सृष्टि यिनका सँग हुन्न भिन्न ।
ज्ञानी खुशी सकल गर्दछ यो विवेक,
ऊ देख्छ सिर्जनभरी चितिमात्र एक ॥
(५२८)

हो मृत्यु यो पनि उही चितिकै स्वरूप,
जन्मिन्छ जीवसँग नै लिइ एक रूप ।
छाया समान सबका सँगमा रहन्छ,
भित्रै लुकी रगतका कणमा वहन्छ ।
(५२९)

मैले लेखेँ विरह कविता शोकको श्लोक लाग्ने,
यी हुन् मेरा स्मृतिमय सबै मित्रको शोक मास्ने ।
कुण्ठा बन्ला अतल मनमा आँशु भित्रै नथाम्नु,
कुण्ठा फ्याक्नै विरह कविता लेखियो स्पष्ट जान्नु ॥
(५३०)
मैले लेखेँ विरहकविता वाग्मती छेउ आई,
सारा कुण्ठा सललल लगिन् वाग्मतीले बगाई ।
मेरा भित्री अतल मनका शोक आँशु समस्त,
लेख्तालेख्तै सकल सकिए ती भए पूर्ण अस्त ॥
(५३१)
सोध्छन् कोही प्रिय अति बनी व्यङ्ग्यको वाण हानी,
वेदान्ती भै विरहकविता लेख्नु हो व्यर्थ ठानी ।
मिथ्या साँचो सकल सहजै लेख्छ वेदान्त जान्ने,
सोध्छन् व्यर्थै अबुझ विचरा अज्ञ केही नजान्ने ॥
(५३२)
कुन हो नित्य वस्तु त्यो अनित्य वस्तु हो कुन ?
वेदान्ती मात्रले सक्छ यस्को गर्न विवेचन ।
(५३३)
भोग यो लोकको देखि स्वर्गको भोग नै तक ।
वेदान्तले सबै मिथ्या हुन् भन्दछ विना धक ॥
(५३४)
त्यसै कारणले मिथ्या संसार यो चिनाउन ।
जन्ममृत्यु सबै मिथ्या अध्यास त्यो बताउन ।
(५३५)

शोक मोह सबै मिथ्या भन्ने ज्ञान दिलाउन ।
शोकका नाममा लेखेँ स्मृतिकाव्य भनीकन ।।

(५३६)

यसमा शोकका भित्र गुह्य वेदान्त दर्शन ।
सारांशमा दिएको छु सूक्ष्म सद्‌ब्रह्म चिन्तन ।।

(५३७)

न बुझ्ने शोक भन्लान् त्यो बुझ्ने वेदान्त भन्दछन् ।
आफ्नू ज्ञान छ जस्तो जे त्यस्तै यो काव्य देख्तछन् ।।

(५३८)

शोक या स्मृति जे भन्छौ शोक मोह हटाउन ।
मैले यो काव्य लेखेको राखी वेदान्त दर्शन ।।

(५३९)

जानेको शोक के गर्ने ? बाँच्नेको शोक व्यर्थ हो ।
त्यसै कारणले शोक मिथ्या हो र अनर्थ हो ।।

(५४०)

मोह अज्ञान वैचित्य यल्ले बाँद्धछ टन्टन ।
मोहको जाल नाशेमा शोक नाशिन्छ तत्क्षण ।।

(५४१)

शोक मोह दुबै नास्न गरेँ यो काव्य सिर्जन ।
यो पढी नरुनू कोही गर्नू सद्‌ब्रह्मचिन्तन ।।

(५४२)

प्रारब्धकर्मवश नै नरयोनि पायौँ
सौभाग्यले युगल भैकन भेट्न पायौँ ।

वाचा म गर्दिन तिमीसँग फेरि भेट्न
ब्रह्माग्निबाट म त लाग्दछु जन्म भुट्न ॥
(५४३)

सम्झन्छु इन्दु ! अब जन्म र मृत्युबाट
वा पार नै भइसक्यौ भवसिन्धुबाट ।
ब्रह्मै तिमी जब भयौ म बनेर ब्रह्म
ब्रह्मै भएर मिलुँला भइ ऐक्य टम्म ॥
(५४४)

संसार हो भयद जन्म र मृत्युपूर्ण
जन्मेर फेरि यस भित्र हुँदैन पर्न ।
तस्मात् तिमी पनि न जन्मनु पार तर्नु
इच्छा पुनर्मिलनको कहिल्यै नगर्नु ॥
(५४५)

लालसा अझ बाँकी छ भित्र मेरो कता कता ।
आऊँ जाऊँ अझै लाग्छ टाढा टाढा जता तता ॥
(५४६)

सञ्जीव पुत्रले भन्छन् क्यानडामा बसौँ गई ।
कसरी दिन काटिन्छन् एक्लो विधुर जो भई ॥
(५४७)

छोरा सगुनले भन्छन् जाऔँ अष्ट्रेलिया घर ।
आमा सम्झी यहाँ वस्ता दिन काट्न छ दुस्तर ॥
(५४८)

भन्दछिन् सरिता छोरी जाऊँ अमेरिका भनी ।
माया गरी सबै भन्छन् जाऊँ झैँ लाग्छ मैँ पनि ॥
(५४९)

सबैले ठीक नै भन्छन् ठीकै ठान्दछु मैँ पनि ।
परन्तु कसरी जाने शोच्नु पर्दछ तै पनि ॥
(५५०)

पचासी वर्षको लागेँ जीर्णशीर्ण शरीर छ ।
पच्तैन पेटमा अन्न सर्वदा पेट पोल्दछ ॥
(५५१)

खाने घुम्ने गयो बैँस गोडा थर्थर काम्दछन् ।
पिशाव र अनिद्राले रातैभरि सताउँछन् ॥
(५५२)

मेरो यो नबुझ्ी कष्ट नबुझ्ी दैन्य दुर्दिन ।
माया र स्नेहले भन्छन् सँगै जाऊँ भनीकन ॥
(५५३)

यदि बैँस भएदेखि आसक्ति मनमा भए ।
जाने थिएँ सबै साथ श्रीमती साथमा भए ॥
(५५४)

जाने थिएँ खुशीसाथ घुम्थेँ देश समुन्नत ।
खान्थेँ भोजन सुस्वादु हाँस्थेँ नाच्थेँ सबैसित ॥
(५५५)

दुर्भाग्य स्वप्न संसार तिलस्मी सब ती भए ।
गए माता पिता पत्नी कठै ती दिन गैगए ।
(५५६)

असक्त तन बोकेर अशान्त मन ली अनि ।
जहाँ जाऊँ म पाउन्न सुखशान्ति कतै पनि ॥
(५५७)

त्यसै कारण मेराले जाऊँ साथ भने पनि ।
डराउँदछु मैबाट पाउलान् दुःख ती भनी ॥
(५५८)
जाऊँ बा भन्नुको साटो आई फर्केर ती सब ।
मेरो सेवा गरे देखिन् मिल्थ्यो आराम नै तब ॥
(५५९)
मेरा आफन्त बुझ्दैनन् मेरो कष्ट कुनै पनि ।
के ल्याऊँ ? आउँदा भन्छन् सारै माया गरी अनि ॥
(५६०)
आसक्ति मनमा छैन सारा दूर भए अब ।
न ल्याऊ भो भयो भन्छु निरासक्त भई तब ॥
(५६१)
व्यावहारिक जे लेखेँ मिथ्या ठानेर तीकन ।
पारमार्थिक हो ब्रह्म ब्रह्मकै गर्छु चिन्तन ॥
(५६२)
मेरो निठुर भो दैव दुर्दयी अति भैकन
मै माथि कष्ट सन्ताप वर्षाउँछ दनादन ॥
(५६३)
जोडी खोसी लग्यो पैले एक्लै दिन बिताउँछु ।
ऐले रोग दियो नाना न खान्छु न निदाउँछु ॥
(५६४)
त्यस्तो त्यो त्रासदीपूर्ण होला दुर्घटना भनी ।
कैल्यै शोचिन छुट्यौँला भनेर स्वप्नमा पनि ।
(५६५)

के भयो ? भगवन् ! यस्तो मेरो गृहस्थआश्रम ।
सारा समाप्त भो ऐले अपाङ्ग तुल्य नै छु म ॥
(५६६)
न जान सक्छु टाढा म जीर्ण आज म भैसकेँ ।
न सक्छु घरमै बस्न हे दैव ! शव भै सकेँ ॥
(५६७)
संसार सपनातुल्य यो हो मृगमरीचिका ।
तथापि किन हो मोह पुत्रदारागृहादिका ॥
(५६८)
मेरो लेख्नु भयो पूर्ण स्मृतिकाव्याख्य ग्रन्थ यो ।
मनका मोह शोकादि प्रक्षालनार्थ लेखियो ॥
(५६९)
परीक्षित् नृपले जस्तो अन्तमा भन्नुपर्दछ ।
'अभयं' ब्रह्म जान्नेले अभयै बन्नुपर्दछ ।
(५७०)
प्राप्त भो जब कैवल्य पर्दैन फेरि जन्मन ।
देहपात जसै हुन्छ त्यो बन्छ ब्रह्म तत्क्षण ॥
(५७१)
अन्तमा ब्रह्मज्ञानीले मोक्ष कैवल्य पाउँछ ।
पैले ब्रह्म थियो जीव ब्रह्म नै हुनआउँछ ॥
(५७२)
सारा नै श्रुतितात्पर्य अन्तमा यही बन्दछ ।
पैले ब्रह्म थियो ज्ञानी अन्तमा ब्रह्म बन्दछ ॥
(५७३)



# उन्नाइसौँ स्मृतिपुष्प – आशीर्वाद र अन्तिम बिदाइ

विनाशी देहकाद्वारा अविनाशी परात्पर ।
ब्रह्म बन्न तिमी वत्स ! गर यत्न निरन्तर ॥
(५७४)
मान्छेको योनि पाइन्न बारम्बार छ दुर्लभ ।
भई ब्राह्मणको पुत्र छ जन्मन असम्भव ॥
(५७५)
मेरा छोरा भई जन्म्यौ पढ वेदान्त नित्यशः ।
मैले वेदान्तका ग्रन्थ लेखेको छु अहर्निशः ॥
(५७६)
अब वृद्ध भएँ धेरै लेख्न सक्तिन लेख्तिन ।
पढ वेदान्त यी ग्रन्थ मेरो आशिष लीकन ॥
(५७७)
पायौ आशिष आमाको सोझै ब्रह्म भई गइन् ।
पैले ब्रह्म थिइन् आमा फेरि ब्रह्म उनी भइन् ॥
(५७८)
त्यसैकारण हे पुत्र ! पढ वेदान्त निर्भ्रम ।
सारा बन्धन हट्ने छन् हट्ला मायिक सम्भ्रम ॥
(५७९)
सतीश पुत्र हे वत्स ! तिम्रै सेवा लिईकन ।
पचासी वर्षको वृद्ध बाँचेको छु कथञ्चन ॥
(५८०)

आमालाई तिमीले नै सेवा गरी निरन्तर ।
धेरै वर्ष बचाएथ्यौ सर्वदा भई तत्पर ॥
(५८१)
जटिल स्वास्थ्य आमाको परीक्षणार्थ नित्यशः ।
चिकित्सकहरू सामु लान्थ्यौ जान्थेँ म नै स्वतः ॥
(५८२)
गाडी आफैँ चलाएर अस्पताल लगीकन ।
उपचार गराएथ्यौ भर्ना त्यहीँ गरीकन ॥
(५८३)
अप्रेशनहरू धेरै गर्नुपर्दा निरन्तर ।
मुटु फोक्सो कलेजो र पेटभो अति जर्जर ॥
(५८४)
महिनौँसम्म राखेर अस्पताल कुरीकन ।
आमालाई बचाएथ्यौ श्रद्धाभक्ति लिईकन ॥
(५८५)
अन्त्यमा तन अत्यन्त अशक्त नै भयो जब ।
अस्पताल कुनै लान सकेनौँ अन्तमा तब ॥
(५८६)
कोरोनाग्रस्त भै सारा अस्पताल थिए भरी ।
यस्तो हालतमा लाली बचाउने कसोगरी ? ॥
(५८७)
यस्तो सङ्कटमा आफ्नै घरमा उपचारको ।
व्यवस्था गरियो राम्रो राखी शय्या सुस्वास्थ्यको ॥
(५८८)

ल्याई डाक्टर सेविका अस्पताल भयो घर ।
उपचार चल्यो राम्रो अहोरात्र निरन्तर ॥
(५८९)

अक्सीजन दिनैपर्थ्यो नटुटाइ निरन्तर ।
नसामा ड्रिप् दिँदै चल्थ्यो उपचार बराबर ॥
(५९०)

महिनौँ घरमै राम्रो उपचार हुँदा पनि ।
इन्दुको स्वास्थ्य सुध्रेन बिग्रँदै गो झनै अनि ॥
(५९१)

बिस्तारै जब दुःसाध्य उपचार हुँदै गयो ।
नैराश्य शोक दुश्चिन्ता मनमा ग्लानि फैलियो ॥
(५९२)

पुत्री पुत्र वधू हाम्रा बस्थे जो दूर गैकन ।
आमाको स्वास्थ्यको हाल बताइयो सबैकन ॥
(५९३)

आमाको जीवनी ज्योति निभ्दै गयो प्रतिक्षण ।
चाँडै आउनु आमाको गर्न अन्तिम दर्शन ॥
(५९४)

सतीश इनु आमाकै समीपमा निरन्तर ।
बसी सेवा गरीरन्थे भएर अति तत्पर ॥
(५९५)

आए उडेर सञ्जीव सुषमा साथमा लिई ।
गरे अन्तिममा सेवा जो सक्थे मन नै दिई ॥
(५९६)

मृत्युञ्जय पुकारेर ग्रहशान्ति गरीकन ।
रोग उन्मुक्तिका लागि भए कार्य अनेकन ॥
(५९७)

चिकित्सकहरूबाट पाई अन्तिम उत्तर ।
दशदानहरू गर्दै भो अन्त्यदान सत्वर ॥
(५९८)

बिस्तारै वाक्य भो बन्द आँखा सजल नै भए ।
ठान्यौँ अन्तिम बेला भो प्रयास व्यर्थ नै भए ॥
(५९९)

ब्रह्ममुहूर्त वेलामा द्वादशी माघ पन्ध्रमा ।
ब्रह्मलीन भइन् इन्दु मिलिन् गैकन ब्रह्ममा ॥
(६००)

छोराहरू र आफन्त सुहृद् जन गईकन ।
भयो अन्तिम संस्कार आर्यघाट लगीकन ॥
(६०१)

आइन् अमेरिकाबाट सरिता अति शीघ्र ती ।
छोराछोरी बुहारीले गरे कर्म हुने जति ॥
(६०२)

घरमा नै बसी सारा क्रियाकर्महरू भए ।
तेह्रौँ दिवसमा यज्ञ पूजा दान सबै भए ॥
(६०३)

विष्णुलक्ष्मी गरी पूजा शय्या दान गरीकन ।
शुद्धशान्ति भयो पूर्ण गराईकन भोजन ॥
(६०४)

शुद्धशान्ति सकी पैलो गरी मासिक पुत्र ती ।
फर्किए क्यानाडातर्फ सञ्जीव वधू साथ ती ॥
(६०५)
अर्को मासिकमा सक्तो दान पुण्य गरीकन ।
फर्के अष्ट्रेलियातर्फ छोरा सगुन तत्क्षण ॥
(६०६)
फर्के छोरा दुवै सुम्पी भारा सतीशका शिर ।
आमाको नित्य गर्दैछन् मासिकादि सधैँभर ॥
(६०७)
आमाको शुरुदेखि नै सेवा गर्दै निरन्तर ।
मृत्यु पर्यन्त नै सेवा गरेथे भई सुस्थिर ॥
(६०८)
आमाको जसरी सेवा गरेथे उनले तब ।
मेरो हृदयदेखिन् नै गर्छन् सेवा उनी अब ॥
(६०९)
कैले प्रोष्टेटका लागि कहिले दाँत निम्तिमा ।
कोरोना, पेटका निम्ति कहिले नीद निम्तिमा ॥
(६१०)
उपचारार्थ लैजान्छन् अस्पताल बराबर ।
चिकित्सकहरू राम्रा खोजी खोजी निरन्तर ॥
(६११)
दिनरात सधैँ नै छन् समर्पित उनी ममा ।
दिनमा साथमा हिँड्छन् सुत्तछन् साथ रातमा ॥
(६१२)

हेर्दछन् औषधी मेरो हेरी समय ख्वाउँछन् ।
मैले भोजन के गर्ने ? सोधेर पथ्य ल्याउँछन् ॥
(६१३)
हाम्रा सेवक गोपी छन् मेरो क्षुधा बुझीकन ।
इच्छानुसारको खाना गर्छन् तयार दी मन ॥
(६१४)
बुहारी सुस्मिता मेरो पथ्यापथ्य बुझीकन ।
हित प्रीत सँगै स्वादु गर्छिन् तयार भोजन ॥
(६१५)
मेरा दाँत सँगै आँत अत्यन्त कमजोर छन् ।
खानाचबिन्न पच्तैन यल्ले रोग उदाउँछन् ॥
(६१६)
म भएँ वृद्ध रोगी र जीर्ण शीर्ण शरीर भो ।
विहार अनि आहार मिल्न नै अति कष्ट भो ॥
(६१७)
सेवा र ओखतीबाट बाँच्नु पर्ने भयो अब ।
नशानाडीहरू सारा कमजोर भए सब ॥
(६१८)
श्रीमती इन्दिरा जस्तै असक्त म हुँदै गएँ ।
आफ्नै आत्मजको सेवा शुश्रूषा चाहने भएँ ॥
(६१९)
दुई आत्मज छन् टाढा जान आउन दुस्तर ।
हुँदा अन्तिमको वेला आइपुग्न छ दुष्कर ॥
(६२०)

अहोरात्र गरी सेवा सतीश पुत्र बस्तछन् ।
पितृभक्त भई मेरो सेवा सदैव गर्दछन् ॥
(६२१)
वेदको 'मातृ देवो' हौ निर्देश पालना गरे ।
आमाको दूधको भारा छोरा सतीश तिरे ॥
(६२२)
सेवा सतीशको पाई बाँच्ता सधैँ खुशी थिइन् ।
आशीर्वाद दिई लाखौँ आमा मुक्त भई गइन् ॥
(६२३)
तिर्न सक्तैन मान्छेले आमा र बाबुको ऋण ।
श्रद्धा र भक्तिले सेवा गरेमा बन्छ उद्ऋण ॥
(६२४)
६ ओटा धातु मान्छेका हुन्छन् शरीरमा अनि ।
तीनोटा धातु आमाका तीनोटा बाबुका पनि ॥
(६२५)
छाला मासुसँगै रक्त राता धातु समग्रमा ।
आमाबाटै लिने गर्छ मान्छे प्रसादरूपमा ॥
(६२६)
हाड बोसो सँगै वीर्य सेता धातुहरू पनि ।
पिताबाट मिली चल्छ सारा मनुष्य जीवनी ॥
(६२७)
त्यसैकारणले माता पिताको ऋण मानिस ।
कहिल्यै तिर्न सक्तैन विना सेवा अहर्निश ॥
(६२८)

शास्त्रानुसार माता र पिताको ऋणमोचन ।
श्रद्धा भक्ति र सेवाले किञ्चित् हुन्छ विमोचन ॥

(६२९)

अन्यथा ऋणको भारा उत्रिँदैन कसै पनि ।
अनन्त योनिमा घुम्नुपर्छ दुःखी सधैँ बनी ॥

(६३०)

बुझ्नु पर्दछ मान्छेले ज्ञानी भई कसैगरी ।
अज्ञानी शास्त्र बुझ्दैन अन्धामा दर्पणै सरी ॥

(६३१)

छोराको ऋण उत्तीर्ण हुने पितृसुसार हो ।
आहारा औषधी सेवा श्रद्धाभक्ति विचार हो ॥

(६३२)

मेरा छोरा दुई टाढा बस्तछन् पितृभक्त छन् ।
सतीश साथमा बस्छन् 'पितृ देवो' सदैव छन् ॥

(६३३)

आमालाई उनैले नै दिलोज्यान दिई अति ।
धेरै वर्ष बचाएथे प्रशंसा म गरौँ कति ? ॥

(६३४)

भोग्नु नै पर्छ प्रारब्ध मृत्यु अन्तिम सत्य हो ।
जीवनी घाम छाया हो यो संसार असत्य हो ॥

(६३५)

सन्तानकी गइन् आमा मेरी अर्धाङ्गिनी गइन् ।
मेरो सेवा र शुश्रूषा गर्ने सहचरी थिइन् ॥

(६३६)

सल्लाहाकारका साथै साथी एकान्तकी थिइन् ।
सुख दुःख सबैमा नै छायातुल्य सधैँ थिइन् ।।
(६३७)
नित्य नैमित्तिकी कर्म काम्यकर्मादि ती पनि ।
मेरा बन्द हुँदै जालान् यात्रा तीर्थाटनै पनि ।।
(६३८)
मेरी बौद्धिक साथी हुन् भाषाविज्ञ सुशिक्षिता ।
ज्योतिर्विद मनोवेत्ता विजेतृ प्रतियोगिता ।।
(६४१)
सविता छन् समीपैमा खोजी खबर गर्दछिन् ।
पर्दा ज्वाईं र आस्थाका साथ सेवा ती गर्दछिन् ।।
(६४२)
सरिता ज्वाईं टाढा छन् सँगै छन् नातिनातिना ।
दूरसञ्चारबाटै नै गर्दछन् प्रायः सम्झना ।।
(६४३)
छोरा सञ्जीव ती टाढा क्यानडामा बसे पनि ।
दूरसञ्चारका द्वारा सम्झन्छन् स्नेहिला बनी ।।
(६४४)
बस्छन् सगुन छोरा ती अष्ट्रेलिया गई अब ।
पूजा र नाति छन् साथ सम्झन्छन् फोनमा सब ।।
(६४५)
छोरा सतीश सुस्मिता सर्वज्ञा नातिनी भई ।
मेरो सेवा सबै गर्छन् स्नेहाप्लुत सधैँ भई ।।
(६४६)

पङ्गु रुग्ण भई जीर्ण कालक्षपण गर्दछु ।
छोरा सतीशको सेवा बुहारीसाथ पाउँछु ॥
(६४७)
सर्वज्ञा नातिनी मेरी विदुषी छन् र बौद्धिक ।
पढाइमा सधैँ श्रेष्ठ ज्ञानी दयालु भावुक ॥
(६४८)
छोरा सतीश बारेमा माथिका पङ्क्तिमा पनि ।
लेखेँ लेखौँ अरू के म आशिष् दिन्छु खुशी बनी ॥
(६४९)
यस्तै रहेछ संसार आफ्नासँग सधैँभर ।
बस्न पाइन्न दुर्भाग्य प्रयास जति नै गर ॥
(६४८)
भाग्यको चक्रमा हामी पेलिएर अहर्निश ।
भेटिन्छौँ अनि छुट्टिन्छौँ पराधीन छ मानिस ॥
(६४९)
अर्धाङ्गिनी गइन् मेरी म ऐले वृद्ध ली तन ।
अझै जिजीविषा बोकी हिँड्छु उद्विग्न भैकन ॥
(६५०)
प्रारब्धले दिएसम्म जस्तै जीर्ण भए पनि ।
बाँच्नै पर्दछ मान्छेले ज्यूँदो शव सरी बनी ॥
(६५१)
दूर देश गई बस्छन् हाम्रा सन्तान ती अब ।
एकै ठाउँ सबैलाई मैले भेट्न असम्भव ॥
(६५२)

ठान्छु अन्तिम हो भेट भविष्य छ अनिश्चित ।
आउने जानु नै पर्छ यै हो सत्य सुनिश्चित ॥
(६५३)

अन्तमा –
के लेखौँ इन्दिरा सम्झी लेख्तै रोकिन्छ लेखनी ।
आँखामा अश्रुका बिन्दु खस्छन् जवानिका बनी ॥
(६५४)

लेखेर साध्य नै छैन सारा जीवनको कथा ।
इन्दिरासँगको मेरो यो वियोगान्त हो व्यथा ॥
(६५५)

सम्झना निम्तिमा मैले अन्तमा अल्प शब्दमा ।
लेखेँ यी तलका पङ्क्ति भावी सन्तान निम्तिमा ॥
(६५६)

*सम्बोधनात्मक एकालाप –*

गहना कपडा सारी मेरा लागि लगाउँथ्यौँ ।
मैले किनेर ल्याएको वस्तु मन पराउँथ्यौ ॥
(६५७)

जाँदा विदेश ल्याएर दिन्थेँ वस्त्र अनेकन ।
आभूषण सँगै दिन्थेँ गहना मन दीकन ॥
(६५८)

अति सादा तथा स्वच्छ थियो जीवन सर्वदा ।
आकाङ्क्षा गरिनौ ज्यादा थियौ साध्वी पतिव्रता ॥
(६५९)

अर्थाभाव हुँदा तिम्रा बेचेर गहना सब ।
विदेश तीर्थयात्रामा गएथ्यौँ दम्पती तब ॥
(६६०)

अष्ट्रेलिया गई हामी केही दिन बसीकन ।
नेपाल फर्किएपश्चात् तीर्थयात्रा गयौँ पुनः ॥

(६६१)

तिम्रो शरीर गल्दै गो रोग लागी थरी थरी ।
औषधी उपचारैमा हामी लाग्यौँ सधैँभरी ॥

(६६२)

अर्थाभाव भई बेच्यौँ जमीन आखिरी तब ।
उपचार चल्यो लामु यही नै धनले सब ॥

(६६३)

मैले यै बीचमा सोधेँ इन्दिराकन सुस्तरी ।
मासिए गहना तिम्रा बनाउँ पहिल्यै सरी ?

(६६४)

रोग शान्त भई पूर्ण हिँड्न सक्ने भएपछि ।
बनाउँला भयो ऐले भनिन् आएन नै पछि ॥

(६६५)

चिकित्सा अनि बिस्तारै दुःसाध्य अति नै भयो ।
उपचार भयो व्यर्थ अन्ततः नहुने भयो ॥

(६६६)

गहना उनका मैले गर्नै पाइन पूरण ।
गइन् उनी रह्यो मेरो प्रतिज्ञा त्यो अपूरण ॥

(६६७)

कैल्यै समय पर्खन्न आयो समय गै गयो ।
मृत्यु पर्यन्त नै मेरो यो खुड्को रहने भयो ॥

(६६८)

केही दान गर्‍यौँ तिम्रा गहना कपडा पनि ।
पाउने छ्यौ भनी ठानी तिमी ब्रह्मै भए पनि ॥
(६६९)
कपडा गहना सारी तिम्रो चिनो भनी कति ।
सन्तानले गरे इच्छा दिएँ भावुक भै अति ॥
(६७०)
रहेका अब थोरै छन् गरी जम्मा तिनै सब ।
तिम्रा स्मरणका लागि राख्छौँ जतनले अब ॥
(६७१)
गहना साथमा तिम्रा चुरा धागो र काँइयो ।
सारी चोलो र दोसल्ला राख्नेछौँ जति पाइयो ॥
(६७२)
गरिनौ कहिल्यै इच्छा गहना धेर लाउने ।
सजिई सोह्रशृङ्गार विदेशतिर धाउने ॥
(६७३)
विदेश म गएँ धेरै मानिनौ जान साथमा ।
गृहलक्ष्मी भई बस्थ्यौ पाली सन्तान साथमा ॥
(६७४)
आदर्श गृहिणी मेरी त्यागकी प्रतिमूर्ति हौ ।
सन्तानकी तिमी धातृ मातृ जीवनदातृ हौ ॥
(६७५)
स्वल्पस्मारक हेरेर पढेर काव्य यो अनि ।
गर्लान् श्रद्धाञ्जलि व्यक्त भावी सन्ततिले पनि ॥
(६७६)

अन्तमा म सबैलाई आशीर्वाद दिईकन ।
मौन बन्छु बिदा हुन्छु सम्झी अन्तिम यो क्षण ॥
(६७७)



*अनुसूची – १*

# ब्रह्मलीना माता इन्दिरा भट्टराईद्वारा प्रणीत
# वाक्यपुष्पाञ्जलि



**मातृवत्सला इन्दिराकी माता जानुका पोखरेल**

---

सर्वोच्च शैलकै छेउ मेरो छ माइतीघर ।
कुभिण्डे नामको गाउँ हो ब्रह्मस्थल सुन्दर ।।
(१)
म हुँ पोखेलकी छोरी पिताजी हरिकृष्ण थे ।
आमा दाहालकी पुत्री जानुका सब भन्दथे ।।
(२)

सोभ्का सद्‌व्यवहारका युगल ती राम्रा भलाद्‌मी थिए,
पुत्री चार र पुत्ररत्न दुइटा जन्मेर बढ्‌दै थिए ।
आमा बाबु मिलेर तन्मय बनी पाल्दै र पोस्तै थिए ।
जानेसम्म कृतार्थ भै सकलमा संस्कार बाँड्‌दै थिए ।।

(३)

यस्तैमा नै खल नियतिले बाण ताकेर हानी,
बाबालाई भ्कटपट लग्यो दुःख मान्दै नमानी ।
मेरी आमा विचलित नभै धैर्य धेरै लिएर,
पालिन् पोसिन् तनयतनया आँसु भित्रै पिएर ।।

(४)

छोराछोरी जति पनि भए पालिताली पढाई,
ठूला पारिन् हरतरहले दुःख अत्यन्त पाई ।
लड्‌दै भिड्‌दै अघिअघि बढिन् नित्य सङ्घर्ष गर्दै,
छोराछोरी स्वजन सबमा स्नेहसौहार्द छर्दै ।।

(५)

दोटी छोरी पतिघर गए भै विवाहादि कार्य,
मेरो आयो परिणय हुने जो थियो धर्मकार्य ।
भ्कट्टै मेरो परिणय भयो खेल खेल्दै रमाई,
सानैमा नै सब हुन गयो थाह राम्रो नपाई ।।

(६)

लामीडाँडा पतिघर गएँ माइती देश छोडी,
मैले जानेँ चलन घरको नव्य सम्बन्ध जोडी ।
जे जे पर्थे सब तरहका काम भ्कर्को नमानी,
गर्नेगर्थें जति पनि परुन् काम जानी नजानी ।।

(७)

कैले बेसी अनि त कहिले लेकमा घाँस काट्थेँ,
डोको बोक्थेँ विकट पहरा वृक्ष झाडी चहार्थेँ ।
गाईभैँसी दुहुन म थिएँ नित्य नै तम्तयार,
खेतीपाती सहित सब नै काममा होशियार ॥
(८)
यस्तैमा नै तनय दुइटै साथ ली दाजुभाइ,
मेरी आमा तल झरिदिइन् सुन्सरीमा बसाइ ।
मेरा आफ्ना पति पनि हिँडे पढ्नलाई भनेर,
मैले काटेँ विरहसँग नै काल एक्ली बनेर ॥
(९)
आमा बाबा पतिघर विषे जो थिए मान्य धेरै,
गर्थेँ सेवा हरतरहले सम्झिँदै काम मेरै ।
भित्रैदेखिन् तनमन दिई मान सम्मान गर्थेँ,
माया गर्थे जनकजननी हर्षले दङ्ग पर्थेँ ॥
(१०)



# लेखकका प्रकाशित ग्रन्थहरू

१. ज्ञान र भक्ति – २०६३
२. रासपञ्चाध्यायी – २०६४
३. ब्रह्मसाक्षात्कार – २०६५
४. उपनिषत्सार – २०६७
५. ब्रह्मसूत्रसार – २०६७
६. मणिरत्नमाला अनुवाद – २०६७
७. अध्यास र चतुःसूत्री – २०६८
८. वेदान्तपरिभाषासार – २०६८
९. श्रीकृष्णाय वयन्नुमः – २०६९
१०. परमसत्य – २०६९
११. अध्यास – २०६९
१२. अद्वैतसिद्धिः १ खण्ड – २०६९
१३. अद्वैतसिद्धिः २ खण्ड – २०७०
१४. अन्तिम उपदेश – २०७०
१५. ब्रह्मविद्या – २०७०
१६. अजातवाद – २०७१
१७. पराविद्या – २०७१
१८. अपरोक्षाऽनुभूति – २०७२
१९. औपनिषद पुरुष – २०७२
२०. द्रष्टा र दृश्य – २०७२
२१. श्रीमद्भागवत-अवतरणिका – २०७४
२२. अष्टावक्रगीता-अनुवाद – २०७५
२३. अवधूतगीता-अनुवाद – २०७५
२४. ऋते ज्ञानान्न मुक्तिः – २०७५
२५. सङ्क्षेपशारीरकसारसङ्ग्रहः संस्कृत – २०७५
२६. ब्रह्मसूत्रकारिका – २०७८
२७. उपनिषत्कारिका – २०७८
२८. महावाक्य – २०७८
२९. वेदान्तचम्पू – २०७८
३०. ब्रह्मसूत्रकारिका-संस्कृत – २०७९
३१. उपनिषतकारिका-संस्कृत – २०७९
३२. उसैको लागिको समीक्षा – २०२६
३३. ऋतुमन्थन, समीक्षा – २०४४
३४. सिर्जनाका फूलहरू, कविता – २०५१
३५. बहादुर शाह, खण्डकाव्य – २०५२
३६. श्रद्धाञ्जलि, शोककाव्य – २०५२
३७. गीत तथा भजनहरू – २०५२
३८. अमरसिंहको चिट्ठी, काव्य – २०५३
३९. क्रान्तिदूत, खण्डकाव्य – २०५३
४०. विविधयात्रा, कविता – २०५५
४१. यात्रैयात्रा, कविता – २०५८
४२. पत्रैपत्र, कविता – २०५९
४३. पृथ्वीविजय, काव्य – २०६२
४४. तीर्थहरूको यात्रावृत्तान्त – २०६४
४५. अनुस्मृति (जीवनयात्रा) – २०६७
४६. वन्दना – २०६८
४७. कविशतक – २०६८
४८. अष्ट्रेलियाको दैनिकी – २०६९
४९. आभास – २०७२
५०. कवितामञ्जरी – २०७४
५१. इन्दिरास्मृतिकाव्य – २०७९

